एनआरएनए युकेको प्रकाशन

# NRN Voice

अंक २, २०१९ सेप्टेम्बर

एनआरएन भ्वाइस

September 2019




## युके: गैर आवासीय नेपाली संघको जननी, हाम्रो चाहना नेपाल र नेपालीको सुख एवं समृद्धि






एनआरएनए युकेको
यही सेप्टेम्बर २०१९ मा हुन गइरहेको
नवौं महाधिवेसनको
सफलताका लागि हार्दिक शुभकामना
व्यक्त गर्दछौं ।

**Prem Gaha Magar**
Vice President NRNA UK & Temptation Night Club,
Aldershot

---




SamBriddhi
Real Estate
helping you prosper





OUR SERVICES

- Property Selling/Buying
- Lettings/Rentals
- Property Management/Guaranteed Rents
- Investment in Real Estate Ventures
- Real Estate Sales & Marketing

Head Office
Nepal Scouts, Shop No. 11,
Lainchaur-29, Kathmandu, Nepal
Contact: 01-4005225, 9840139995
Email: info@sambriddhirealestate.com
Social Media : sambriddhirealestates
Website: www.sambriddhirealestate.com

UK Office
4A Lakedale Road Plumstead, London,
United Kingdom SE18 1PP
Tel.:+44 20 3384 4434, +44 20 8853 9304

LALIT KUMAR NEUPANE | Marketing Director | 07957915059

# विषयसूची






## NRNA VOICE

एनआरएनए युकेको प्रकाशन
अंक २, सेप्टेम्बर २०१९

**सम्पादक**
रमेशसिंह सराङकोटी मगर

**अतिथि सम्पादक**
भगिरथ योगी
नरेश खपाङ्गी मगर

**सम्पर्क**
pressnpublication.dpt.nrnuk@gmail.com

# एनआरएनए युके कार्य समिति



**योगकुमार फगामी, अध्यक्ष**
07787193928
yog6798phagami@gmail.com



**पुनम गुरुङ, उपाध्यक्ष**
07727135376
gurungchelsea@gmail.com



**शेरबहादुर सुनार, उपाध्यक्ष**
07899704899
shersunar@btinterne.com



**डा प्रेमबहादुर आले, उपाध्यक्ष**
07825538397
premale@hotmail.com



**सुशिला राई, उपाध्यक्ष**
07853300405
susila_n69@hotmail.co.uk



**ललित न्यौपाने, उपाध्यक्ष**
07957915059
neupane1000@gmail.com



**प्रेमबहादुर गाहा, उपाध्यक्ष**
07833507666
premgahamgr@gmail.com



**राजकुमार त्रिपाठी, महासचिव**
07798694816
pujapujan@hotmail.com



**विनय अधिकारी, उपमहासचिव**
07474224112
vinaya@oxfordedu.co.uk



**तारानाथ भण्डारी, सचिव**
07533192680
tarant123@yahoo.com



**नारायण गाउंले, सचिव**
07916733773
narayangaunle@hotmail.com



**सुरोज मास्के, सचिव**
07507668970
surojmaskey2@gmail.com



**सचिन श्रेष्ठ, कोषाध्यक्ष**
07888812312
sachinsth@hotmail.com



**गजेन्द्र गुरुङ, सहकोषाध्यक्ष**
07479707757
gajendra_gurung@hotmail.com



**रमेश सराङकोटी, प्रवक्ता**
07578571478
spokespersonnrnauk@gmail.com


लिलादेवी गुरुङ, महिला संयोजक
07971254783
lilagurung013@yahoo.co.uk


लालबहादुर गुरुङ (एलबिजेड), युवा संयोजक
07988320082
lbzgrg999@hotmail.com


कुमार थापा, युवा संयोजक
07846462787
kumar_unus@hotmail.com


अर्कराज तिम्सिना, सदस्य
07877327901
arka.timsina@gmail.com


गंगाबहादुर राना, सदस्य
07401464166
gangarana@hotmail.com


बिमला लिम्बू, सदस्य
07413699402
blimbu124@gmail.com


डेबिन्द्र थापा, सदस्य
07402065153
debinthapa@hotmail.com


मुकेश राना, सदस्य
07562707323
mukesh@nirbiz.com


पवन राई, सदस्य
078822269083
koyouj@hotmail.com


पवन शर्मा, सदस्य
07875663991
info@gurkhaoven.com


होमनाथ पौडेल, सदस्य
07888673660
homnath@yahoo.co.uk


जीत रानाभाट, सदस्य
07853029106
jitranabhat@gmail.com


महेश गिरी, कोअप सदस्य
07877028479
maheshgiri@hotmail.com


मनिष खड्का, कोअप सदस्य
07414659537
mirojkumar@yahoo.com


राजन खकुरेल, कोअप सदस्य
07938623803
rajkhaku@gmail.com


गौमाया गुरुङ, कोअप सदस्य
07830999894


डा दिलिपकुमार यादव, कोअप सदस्य
07457185726
dilipky@gmail.com


जयप्रकाश गुरुङ,
आइसिसी सदस्य


शान्ति कुँवर थापा,
आइसिसी सदस्य


कुमारी गुरुङ,
आइसिसी सदस्य


रामशरण सिंखडा,
आइसिसी सदस्य


शुष्मा राई,
आइसिसी सदस्य







Non-Resident Nepali Association (NRNA)

गैरआवासीय नेपाली संघ



भवन भट्ट

**शुभकामना**

एनआरएनए युकेले आफ्ना गतिविधिहरु समेटेर **एनआरआरएन भ्वाईस** स्मारिकाको दोश्रो अंक प्रकाशन गर्न लागेको जानकारी पाउंदा मलाई निकै खुशी लागेको छ ।

संघले अभियानको सुरु देखिनै विश्वभरी छरिएर रहेका गैरआवासीय नेपालीहरुलाई एकबद्ध गर्दै आफ्नो संजाल हाल ८० वटा देशमा स्थापित गरिसकेको छ र यसको विस्तार हुने क्रम अझ जारी रहेको छ ।

विभिन्न मुलुकमा गठन भएका राष्ट्रिय समन्वय परिषदहरुले नेपालको पहिचालनलाई विदेशमा स्थापित गराउन र नेपालको समृद्धिको लागि उल्लेख्य कार्यहरु गरि रहेका छन् । यसै सन्दर्भमा राष्ट्रिय समन्वय परिषद् युकेले अन्तर्राष्ट्रिय समन्वय परिषद्ले संचालन गरेका हरेक क्रियाकलापहरुमा सहयोग गरी संघको अभियानमा थप टेवा पुऱ्याई रहेको बारे हामी सबैलाई जानकारी भएकै विषय हो ।

प्रकाशन हुन लागेको यस स्मारिकाले राष्ट्रिय समन्वय परिषद् युकेका गतिविधिहरु बारे जान्न ठूलो सहयोग गर्ने छ भन्ने मेरो विश्वास रहेको छ । यस स्मारिका युकेका साथै युरोप र विश्वभरी छरिएर रहेका नेपालीहरुका लागि उपयोगी र जानकारीमुलक हुन सकोस् भन्ने कामना समेत गर्दछु ।

भवन भट्ट
अध्यक्ष,
अन्तर्राष्ट्रिय समन्वय परिषद् ।

७ जुलाई २०१९

# फगामीलाई पाँच प्रश्न

योगकुमार फगामी एनआरएनए युकेका वर्तमान अध्यक्ष छन् । यसभन्दा अघि एनआरएनए युकेको महासचिव र उपाध्यक्ष हुँदै उनी यस पद सम्हाल्न आइपुगेका हुन् । बेलायतका विभिन्न सामाजिक संस्थामा लामो समयदेखि क्रियाशील फगामी पूर्व गोरखा सैनिक पनि हुन् । एनआरएनए युकेको दुईवर्षे कार्यकालको अन्तिम केही साता बाँकी रहँदा उनीसित गरिएको संक्षिप्त वार्ता :



**१) आफ्नो दुईवर्षे कार्यकालको समीक्षा कसरी गर्नुहुन्छ ?**

एउटा चुनौती पनि थियो । एउटा अवसर पनि थियो । दुवैलाई लिएर जाँदा मैले नेतृत्व गरेको कार्यसमिति, बेलायतबासी नेपालीको संघसंस्थाका प्रतिनिधि, कार्यसमितिका साथीहरू, पत्रकार मित्रहरू, सम्पूर्णले हरेक ठाउँमा, हरेक तह र तप्कादेखि गर्नुभएको सहकार्य, सल्लाह, सुझावहरूबाट समग्रमा सफल भएको मैले महसुस गरेको छु ।

**२) दुई वर्षअघि तपाईले घोषणा गर्नुभएको प्रतिवद्धता पत्रको कसीमा राखेर हेर्दा तपाईका योजनाहरू कति पूरा भए कति भएनन् ?**

जहाँसम्म लाग्छ मेरा प्रतिवद्धतामा भएका सबै पूरा गरेजस्तो लाग्छ । एउटै मात्रै हो आपतकालिन कोष कम्तीमा ५० हजार पाउण्डको बनाउने भन्ने मात्र पूरा नभएको हो । एनआरएनए युकेलाई ठाउँठाउँमा पुऱ्याउने बेलायतबासी नेपालीमाझ एनआरएनमय बनाउने भन्ने मुख्य उद्देश्य थियो त्यसमा ऐतिहासिक सफलता हासिल भएको छ । स्कटल्याण्ड, मिडल्याण्ड, आयरल्याण्ड, वेल्स सबैतिर म आफैं पटकपटक पुगेको छु । १० हजार सदस्य बनाउने हाम्रो प्रतिवद्धता थियो त्यो सफल भएको छ । अहिले मतदाताको तथ्यांक हेर्दा स्कटल्याण्डदेखि पूर्वमा डोभर, राम्सगेट, वेल्स, आयरल्याण्ड, प्लेमथ, वेमथ सबैतिर मतदाता छन् । यसबाट बेलायतबासी नेपालीको प्रतिनिधि संस्था एनआरएनए युके हो भन्ने प्रमाणित भएको छ ।

अर्को, नागरिकताको निरन्तरता र गोरखाहरूका बारेमा नेपालबाट आउने पूर्व प्रधानमन्त्री, प्रधानमन्त्री, परराष्ट्र मन्त्री, अर्थमन्त्री, उपसभामुख, परराष्ट्र सचिव लगायतलाई ज्ञापन पत्र पनि बुझायौं । एनआरएनको गत विश्व सम्मेलनका क्रममा नेपाल जाँदा हामीले तत्कालीन प्रधानमन्त्री, सभामुख, उपराष्ट्रपति लगायतलाई हामीले हाम्रा समस्याका बारेमा ज्ञापन पत्र बुझायौं । बेलायतमा आउनेहरू मन्त्री, साँसद, नेताहरूलाई पनि हामीले ज्ञापन पत्र बुझायौं । यसैगरी, गत सेप्टेम्बरमा नेपालमा नागरिकता ऐन संशोधनका लागि संसदमा पेश हुनासाथ बेलायतबाट एनआरएन आइसिसीका उपाध्यक्ष कुल आचार्य, एनआरएनए युकेका चिफ प्याट्रोन डमर घले, म आफैं, महासचिव राजकुमार त्रिपाठी नेपाल गएर कानुन मन्त्री, गृहमन्त्री, राज्य व्यवस्था समितिका सभापति, प्रतिपक्षी दलका नेता र प्रमुख राजनीतिक दलका नेताहरूलाई ज्ञापन पत्र पनि बुझायौं ।

यसैगरी, सन् २०११ मा बेलायतमा हुने राष्ट्रिय जनगणनामा नेपाली महल खडा गरियोस् भनेर बेलायती प्रधानमन्त्रीको कार्यालयमा गएर ज्ञापन पत्र पनि बुझायौं ।

कार्यक्रमको कुरा गर्दा हाम्रो समुदायमा फरक क्षमता भएका नागरिकहरूलाई हेर्ने दृष्टिकोण बदलियोस् भनेर नेपालबाट अपांगता भएका कलाकार ल्याएर पनि च्यारिटी गर्यौं । यस्तै, खेलकुदतर्फ बक्सिङ खेलाडीहरू ल्याएर च्यारिटी गर्यौं भने नेपालमा तेक्वान्दो खेलमा भाग लिन बेलायतबाट जाने खेलाडीहरूलाई सहयोग गर्यौं । युवाहरूमा उत्साह ल्याउन र नेपाल आमाप्रति आस्थाभाव जगाउनका लागि महानायक राजेश हमाललाई ल्याएर कार्यक्रम गरियो । नेपालमा १० अर्ब लगानी भित्र्याउने घोषणा पनि बेलायतबाटै भयो र नेपाल राष्ट्र बैंकका गभर्नर डा. चिरञ्जीवी नेपालको उपस्थितिमा एनआरएनए आइसिसी अध्यक्ष, उपाध्यक्षहरूसमेतको सहभागिता एउटा ठूलो कार्यक्रम गऱ्यौं ।

नेपालबाट आउनुभएका अध्यागमन विभागका महानिर्देशकहरूसित बसेर नेपालको अन्तर्राष्ट्रिय विमानस्थलमा गैरआवासीय नेपालीहरूका लागि एउटा अलग डेस्क होस् भनेर माग गरेका थियौं । जुन कुरा अहिले लागू भइसकेको छ र गैरआवासीय नेपालीहरूका लागि विमानस्थलमा अलग्गै डेस्क खडा भइसकेको छ ।

यसबाहेक एनआरएनए युकेका नियमित कार्यक्रमहरू काउन्सिल बैठक, तीनवटा राज्यमा राज्य समन्वय समितिहरू गठन भव्यरूपमा सम्पन्न भयो । आफ्नो कला, भाषा साहित्य, संगीत, खेलकुद क्षेत्रमा लागेका युवाहरूलाई प्रोत्साहन र सम्मान गरिँदै आएको छ ।

अहिले दुई वर्षको कार्यकालमा हामी युकेमा जान पर्ने र पुग्न पर्ने ठाउँ कतै बाँकी छैन । हामीलाई जसजसले सहयोग माग्नुभयो, हामीले मद्दत दियौं । पत्रकार मित्रहरू, संघ संस्थाहरूको सहयोग प्राप्त भयो । यसमा हामीलाई धेरैले, प्राय सबैले मद्दत गर्नुभएको छ । अहिलेको एनआरएनए युकेको ऐतिहासिक सदस्यता संख्याले पनि हाम्रो मेहनत, दुःख, परिश्रम प्रमाणित गरिदिएको छ । विगतमा केही कमजोरीहरूले युकेका सबै भागमा पुग्न सकेनौ होला तर अहिले एनआरएन युके सबैतिर पुगेको छ । हालैको उम्मेदवारी मनोनयनमा ७४ पदमा ११७ वटा उम्मेदवारी पर्नाले पनि संस्थाप्रतिको आम बेलायतबासी नेपालीहरूको आकर्षक प्रष्ट हुन्छ । यी सबै तथ्यबाट हामी सफल कार्यसमिति हौं भन्ने प्रमाणित हुन्छ ।

**३) युकेबाटै एनआरएनएको शुरूवात भयो । एनआरएनको इस्युहरूमा पनि युकेले नेतृत्व गरेको देखिन्छ । समग्र एनआरएनए अभियानमा चाहिँ युकेको स्थान कहाँ पाउनुहुन्छ ?**

अन्तर्राष्ट्रिय लेभलमा पनि एनआरएनए युकेको स्थान उच्च छ र एनआरएनए आइसिसीले पनि त्यही दृष्टिकोणले हेर्ने गरेको छ । बेलायतबासी हुनु र एनआरएनए युकेको सदस्य हुनु गौरवको विषय हो । यो गौरव ल्याउन सबै सदस्यहरूको योगदान छ । धेरै कारणहरूले गर्दा यो स्थान प्राप्त भएको हो । चाहे त्यो प्राकृतिक विपत्तिमा परेकालाई राहत जुटाउने कार्यमा होस् या प्रवासी नेपालीहरूका सरोकारका अन्य विषयमा होस् । एनआरएनए युकेले प्रभावकारी भूमिका निर्वाह गरेको छ । त्यसैले आइसिसीले पनि सक्षम एनसिसीका रूपमा हामीलाई हेर्ने गरेको छ जुन अत्यन्तै गौरवको कुरा हो । यो म अध्यक्ष भएर मात्र भएको होइन यो विगतदेखिको निरन्तरता पनि हो । संस्थागत पहिचान पनि हो । मलाई पनि यो अवसर प्रदान गर्नुभएकोमा बेलायतबासी नेपालीहरूलाई धन्यवाद दिन चाहन्छु ।

> अन्तर्राष्ट्रिय लेभलमा पनि एनआरएनए युकेको स्थान उच्च छ र एनआरएनए आइसिसीले पनि त्यही दृष्टिकोणले हेर्ने गरेको छ । बेलायतबासी हुनु र एनआरएनए युकेको सदस्य हुनु गौरवको विषय हो ।

**४) पहिले पहिलेका एनआरएनए युकेका अधिकांश अध्यक्षहरू व्यापारिक पृष्ठभूमिका थिए । तपाई मात्र हुनुहोला शायद बेलायतमा रहेका आम नेपालीले जस्तै जागिर गर्दै एनआरएनए युके हाँक्ने । के सामान्य जागिर गरेर पनि एनआरएन हाँक्न सकिने रहेछ ?**

बेलायतबासी नेपाली दाजुभाइ दिदीबहिनीले पनि शायद महसुस गर्नुभयो होला शायद म जस्तो सामान्य जागिर गर्ने मानिसले पनि यो एनआरएनको नेतृत्व गर्न सक्ने रहेछ भन्ने । यो यो मैले प्रमाणित गरे जस्तो लाग्छ । यद्यपि यो संस्थामा व्यापारिक पृष्ठभूमिका, पैसा भएका, समय भएकाहरूलाई अलि बढी सहजता त होला नै । तर त्यो होला भन्दैमा एउटा मानिसमा इच्छाशक्ति, आत्मबल भयो भने परिवार, नातागोता, इष्टमित्रहरूले सहयोग गर्ने रहेछन् । म आफैं आर्थिक सम्पन्न नभए पनि, व्यावसायिक रूपले सम्पन्न नभए पनि, बौद्धिक रूपमा सम्पन्न नभए पनि म जस्तो सामाजिक सेवामा सेवा गर्छु भन्ने व्यक्तिले पनि समाजलाई हाँक्न चलाउन नेतृत्व गर्न सक्दो रहेछ भन्ने प्रमाणित गर्न पनि म एनआरएनएमा आएको थिएँ । मलाई लाग्छ मैले आफूले प्रमाणित गरेँ अब बाँकी विश्लेषण बेलायतबासी नेपालीहरूको जिम्मामा छोड्न चाहन्छु ।

**५) अन्त्यमा आफ्नो कार्यकालमा गर्न सकिनँ । आउने कार्यसमितिले गरे हुन्थ्यो भन्ने केही छ ?**

मेरो अलिकति गर्न नसकेको भनेको नेपाल हाउस हो जुन म आफैं उपाध्यक्ष हुँदा केही सहयोग पनि संकलन गरिएको थियो । अहिले एनआरएनए युकेको आफ्नै व्यवस्थित कार्यालय समेत नभएको अवस्थामा नेपाल हाउसको परिकल्पना राम्रो छ । तर यो अल्पकालिन योजना होइन । यो भावी पुस्तालाई हस्तान्तरण गर्ने दीर्घकालिन र बृहत योजना हो । म अन्य कार्यमा ब्यस्त भएकाले यस योजनामा भनेजति समय दिन सकिनँ । दुई वर्ष कार्यकाल छोटो पनि हुँदो रहेछ । अर्को, अहिले २१ शताब्दीमा डिजिटल एनआरएन बनाउन शुरूवात चाहिँ गरियो तर भनेजस्तो गरी जोड दिन सकिएन । तर अझै पनि त्यो सम्पत्ति हामीसित छ । त्यसमा हामीले लगानी गरेका छौं । आउने कार्यसमितिका साथीहरूलाई यसलाई अरू परिमार्जित गरेर अघि बढाउन अनुरोध गर्दछु । यी दुईवटा कुरामा मात्र मलाई चाहेर पनि कम प्राथमिकता दिन सकेको जस्तो लाग्छ । बाँकी कुरामा मैले दिनसक्ने, गर्न सक्ने, परिवार र पेशाको समय कटाएर एनआरएनए युकेलाई मैले तन, मन, धन, क्षमताले भ्याएसम्म दिएँ भन्ने मलाई लाग्छ । दुई वर्षमा मैले गरेको कार्यप्रति म आफैं सन्तुष्ट छु । मलाई गर्नैपर्ने काम गर्न सकिएन भन्ने पछुतो छैन । ●

# एनआरएनए युके च्यारिटी विभागको रिपोर्ट



प्रेम गाहा मगर
उपाध्यक्ष

सन् २०१७-२०१९ अधिवेशनमा उपाध्यक्ष पदमा प्रत्यक्ष निर्वाचित भएपछि म प्रेम गाहामगरले च्यारिटी विभागको जिम्मा पाएको थिएँ । करिब दुईवर्ष सो पदमा रही थुप्रै च्यारिटीका कामहरू गरेको मलाई लागेको छ । जसका केही उदाहरणहरू यसप्रकार छन् :

१. गत निर्वाचनमा गरेका प्रतिबद्धता अनुसार २०१८ मार्च ३१ मा च्यारिटी डिनर विथ बक्सिङ शो आयोजना गरिएको थियो । नेपाली समुदायमा पहिलोपटक आयोजना गरिएको यस किसिमको कार्यक्रमले सबैको मन जितेको थियो ।

२. युवा र अग्रजहरूबीचको दूरी घटाउन तथा युवाहरूलाई एनआरएनको महत्व बुझाउन विभिन्न अभियानहरू पनि सञ्चालन गरिएका थिए ।

३. यसैगरी २०१८ सेप्टेम्बर १ मा समाजले अपाङ्ता भएकाहरूलाई हेर्ने नजर बदल्नका लागि तथा अपाङ्ता भएकाहरू आफैं केही गर्न सक्छन् भन्ने प्रमाणित गर्न मेरै नेतृत्वमा अपाङ्ता सहयोग साँझ सञ्चालन गरिएको थियो । कार्यक्रममा विभिन्न युद्धमा घाइते २५ जना ग्रेट वार हिरोज डिसेवल्ड भेट्रान लगायत बेलायतमा रहेका धेरै कला भएका अपाङ्गहरू र नेपालका आएका अपाङ्ग कलाकारहरूलाई सम्मान गरिएको थियो ।

४ . यसैगरी १८ फेब्रुअरी २०१९ मा भ्वाइस अफ नेपालका कलाकारसँग बर्मिङघममा च्यारिटी डिनर आयोजना गरिएको थियो । नेपाली संस्कृति जोगाउन र आपतकालिन सहयोगका लागि उक्त कार्यक्रम प्रभावकारी भएको थियो ।

५. २९ वर्षीय युवक लेख राना मगरको बेलायतमा अल्पायुमै निधन भएको हुँदा मेरै अगुवाईमा २२ फेब्रुअरी २०१९ मा राना मगरको शव नेपाल लैजान १ हजार १७९ पाउण्ड संकलन गरी हस्तान्तरण गरिएको थियो ।

६. एनआरएनए युकेको हरेक कार्यक्रममा सहभागी हुँदै अध्यक्ष तथा कार्यसमितिले खटाएका हरेक कार्यक्रममा पनि म प्रतिनिधित्व गर्दै आएको छु ।

७. डब्लूबिए बक्सर जोन राईटरले वर्ल्ड रैंकिंग बक्सिङ खेलमा मेरै पहलमा एनआरएनए युकेको लोगो अंकित ड्रेस लगाएर खेलेका थिए । उनले दुई खेल खेल्दा चार जना गोर्खा सैनिकहरूले उनलाई इस्कोर्ट गरेर रिंगसम्म लगेका थिए ।

८. ४ मे २०१९ मा अमेरिकाको लास् भेगासमा संपन्न डब्लूबिए वर्ल्ड रैंकिंग १ बक्सिङ खेलमा जोन राईटरले गोर्खा र एनआरएनए अंकित ड्रेस लगाएर खेलेका थिए । यसले नेपाल र नेपाली (एनआरएन र गोर्खा) लाई विश्वसामु चिनाउन थप मदत पुगेको थियो ।

९. मेरै पहलमा युवाहरू बीच मैत्रीपूर्ण फुटबल खेलको आयोजना भएको थियो। यस खेलको सबै स्पोन्सर मैले नै गरेको थिएँ । उक्त खेलमार्फत धेरै युवाहरू बीच भाइचारा बढेको र यसले समाजमा सकारात्मक सन्देश दिएको थियो ।

१०. राज्य समन्वय परिषद् गठन गर्नका लागि वेल्स, स्कटल्याण्ड, नर्दन आयरल्याण्डमा म आफैं पुगेर महत्वपूर्ण भूमिका निर्वाह गरेको थिएँ ।

११. गैरआवासीय नेपालीलाई दोहोरो नागरिकता दिलाउन पहल गर्न मैले नेपाल र बेलायतमा ज्ञापन पत्र बुझाउन अगुवाइ गरेको थिएँ ।

च्यारिटी विभाग प्रमुख मैले बितेका दुई वर्षमा संस्थाका कमीकमजोरीलाई नजिकबाट नियाल्ने अवसर पाएँ । सो अवधिमा मैले संस्थालाई विशुद्ध सामाजिक संस्थाको रूपमा विकास गर्न र सबै बेलायतबासी नेपालीलाई समेट्न कोसिस गरेको थिएँ । ●

# संगठन विस्तारको क्रममा एनआरएनए युके



ललित कुमार न्यौपाने

गैर आवासीय नेपाली संघ बेलायतको इतिहासमा पहिलो पटक विधान बमोजिम बेलायतका चार राज्यमा राज्य समन्वय परिषद गठन गरी संगठन विस्तार गर्न कार्यसमितिको बैठकले उपाध्यक्ष ललित कुमार न्यौपानेको संयोजकतामा राज्य समन्वय विभाग गठन गरेको थियो । जसमा उपसंयोजक अर्जुन कटुवाल, सचिव डा मुकुन्द बास्तोला र सदस्यहरूमा शालिक सापकोटा, सुनिलबाबु खड्का, हयारी गुरूङ, शिब खरेल, प्रभु न्यौपाने, रूबिना राउत, तिलक भट्टराई तथा भीमसेन खड्का रहनु भएको थियो ।

यसरी गठन भएको राज्य समन्वय विभागले विभिन्न ठाउमा पटक पटक बैठक एवम् गोष्ठी, भेला, सेमिनार संचालन गरेको थियो ! विभागले चार वटा राज्य समन्वय बिभाग गठन गर्न हरेक राज्यको भेला संयोजन गर्न नर्दन आयरल्याण्डमा सालिक सापकोटा, वेल्समा प्रभु न्यौपाने, स्कटल्याण्डमा तिलक भट्टराई, इंगल्याण्डमा हयारी गुरूङलाइ संयोजक तोकी कार्य विभाजन गरेको थियो ।

राज्य समन्वय विभागले हरेक राज्यका एनआरएन अभियन्ताहरूसंग पटक पटक संवाद र छलफल गरी, चार राज्यका प्रतिनिधिहरूसंग समन्वय गरी हरेक राज्यमा भेला हुने मिति, स्थान र समय तोकी गैर आवासीय नेपाली संघ युकेको विधानमा व्यवस्था भए बमोजिम गैर आवासीय नेपाली संघ युके राज्य समन्वय परिषदहरू गठन गरी संस्थाका गतिबिधिहरू जनस्तरमा सबैतिर लैजाने र संस्थाको कार्य प्रभावकारी रूपले अघि बढाउन प्रयास गर्यो ।



गैर आवासीय नेपाली संघ बेलायतको इतिहासमा पहिलो पटक मिति ११ फेब्रुअरी २०१८ मा बेलफास्टमा एउटा भेला आयोजना गरी लिलाराम निउरेको अध्यक्षतामा नर्दन आएरल्याण्ड राज्य समन्वय परिषद गठन गरियो । उक्त समितिको उपाध्यक्षमा नारायण कुंवर, सचिवमा अब्जन आचार्य, सहसचिव हुकुम केसी, कोषाध्यक्ष गोमा खड्का, सहकोषाध्यक्ष सुमित्रा कंडेल, सदस्यहरूमा भुमिश्वर सापकोटा, बलराम कंडेल, लक्ष्मण निउरे, सविन पाण्डे, लक्ष्मण चिमौरीया, तेज रेग्मी र निर्जल अधिकारी रहनु भएको थियो ।

त्यसै गरी १७ जुन २०१८ मा वेल्सको कार्डिफमा एक भेला आयोजना गरी रामचन्द्र पोखरेलको अध्यक्षतामा वेल्स राज्य समन्वय परिषद गठन गरियो । उक्त समितिको उपाध्यक्ष खिम क्षेत्री, सचिव निर मोक्तान, सहसचिव प्रकाश कंडेल, कोषाध्यक्ष बिभूषण मान श्रेष्ठ, सह कोषाध्यक्ष एक बहादुर आले, सदस्यहरू सीता राई, रामेश्वर देवकोटा, बलाराम अधिकारी, मेम राज न्यौपाने तथा दिपक सुब्बा रहनु भएको थियो ।

त्यसै गरी २३ जुलाई २०१८ मा स्कटल्याण्डमा एक भेला अयोजना गरी मोहन कार्कीको अध्यक्षतामा स्कटल्याण्ड राज्य समन्वय परिषद गठन गरियो । उक्त समितिको उपाध्यक्षद्वय काशीराम भण्डारी, नारायण पहारी, सचिव कृष्ण दाहाल, सहसचिव दिवाकर पाण्डे, कोषाध्यक्ष धन बहादुर केसी, सहकोषाध्यक्ष यदुमणि सापकोटा, सदस्यहरू विजयमान डंगोल, उज्वल कार्की, माया खरेल, गोबिन्द खरेल, सुशिला गैरे, लक्ष्मी शर्मा सापकोटा, भोजराज खरेल, अन्जली चापागाईं, बलराम पौडेल, डिलाराम गैरे, कृष्ण देवकोटा रहनु भएको थियो भने संरक्षकद्वय भोला खनाल र यज्ञमूर्ति ढकाल रहनु भएको थियो ।

बेलायतका ४ राज्य मध्ये ३ वटा गठन भै इंगल्याण्ड राज्य समिति बनाउन भेला आयोजनाको मिति र स्थान समेत तोकिएकोमा विशेष कारणले स्थगित भै गठन गर्न सकिएन । इंगल्याण्ड ठूलो राज्य भएकाले केन्द्रको निर्वाचन संगै निर्वाचन गराउंदा उपयुक्त हुने देखिन्छ । गठन भएका सबै राज्य समितिहरू विविध क्रियाकलापहरू संचालन गर्दै क्रियाशील छन् ।

यसरी लामो समय पछी एनआरएन युके सबै राज्यमा पुगी संगठन विस्तार गर्ने दिशामा अग्रसर छ । तर अंझै बनेका राज्य समन्वय परिषद्हरूलाई साधनस्रोत सम्पन्न बनाई बलियो बनाउने र नबनेको इंगल्याण्ड राज्य बनाउनु पर्ने देखिन्छ । त्यसै गरी हरेक राज्य अन्तर्गत आबस्यकता अनुसार क्षेत्र र काउन्टी समितिहरू समेत निर्माण गरी एनआरएनएलाई जनस्तरमा लैजान जरूरी छ जसले गर्दा आफ्नो उद्देश्य हासिल गर्दै ठोस कार्य गर्नुका साथै एनआरएनए युकेको नेतृत्व विकासमा ठोस योगदान पुग्ने कुरामा दुई मत नहोला । ●

*(एनआरएनए युकेका उपाध्यक्ष न्यौपाने एनआरएनए युकेको राज्य समन्वय विभागका संयोजक पनि हुन् । )*

गैर आवासीय नेपाली संघ बेलायतको इतिहासमा पहिलो पटक मिति ११ फेब्रुअरी २०१८ मा बेलफास्टमा एउटा भेला आयोजना गरी लिलाराम निउरेको अध्यक्षतामा नर्दन आएरल्याण्ड राज्य समन्वय परिषद गठन गरियो ।



# आफै एनआरएनएको सदस्य बन्ने वातावरण कसरी सिर्जना गर्ने ?



▸ शेरबहादुर सुनार

उपाध्यक्ष, एनआरएनए युके (२०१७-२०१९)

गैरआवासीय नेपाली संघ युकेको ९ सेप्टेम्बर २०१७ मा सम्पन्न महाधिवेशनले मलाई आठौं कार्यसमितिको उपाध्यक्षको जिम्मेवारी प्रदान गऱ्यो । शुरूको दिनमा गैरआवासीय नेपालीहरूको हकहितका लागि थुप्रै काम गर्न सकिन्छ कि भन्ने विश्वास म भित्र थियो । र, म काम गर्नका लागि निकै उत्साहित पनि थिएँ । कार्यसमितिले बोलाएका विभिन्न बैठक, छलफल, भेटघाट, अन्तरक्रिया लगायतका हरेक गतिविधिमा म सहभागी भएँ । कार्यसमितिले दिएको जिम्मेवारीलाई पूरै निर्वाह गर्ने प्रयत्न गरें । धेरै ठाउँमा सकारात्मक परिणामहरू पनि आए। जसको फलस्वरूप आज एनआरएनए युकेको १० हजार सदस्यता बनाउने अभियानले साकार रूप पाएको छ ।

आठौं कार्यसमितिले आफ्नो कार्यकालमा १० हजार सदस्यता बनाउने लक्ष्य अगाडि बढायो । शुरूकै बैठकले मलाई संगठन सुदृढ तथा सदस्यता वृद्धिका लागि आवश्यक सुझाव पेश गर्न जिम्मेवारी दियो । मैले सो सम्बन्धमा अध्ययन गरें । कार्यसमितिमा सुझाव पेश गरें र कार्यसमितिले मलाई सदस्यता वितरण संयोजकको जिम्मेवारी प्रदान गऱ्यो । कार्यसमितिले दिएको जिम्मेवारीलाई निर्वाह गर्न मैले हरसम्भव प्रयास गरें । मैले निर्वाचनको अवस्थामा मात्र सदस्यता बन्ने परम्परालाई तोड्नु पर्छ भन्ने उद्देश्य अनुरूप सदस्यताको आवश्यकता र यसको औचित्य बारे पटक-पटक विभिन्न संघसंस्थामा गएर बुझाउने प्रयत्न गर्दै आएँ, तर त्यति राम्रो परिमाण भने प्राप्त हुन सकेन ।

अहिले नवौं कार्यसमितिको निर्वाचनको मिति घोषणा भएपछि मात्र सदस्यता बन्ने क्रम अगाडि बढेको छ । के निर्वाचन प्रयोजनका लागि मात्र सदस्यता बन्ने र बनाउने हो ? भन्ने जिज्ञासा ममा जस्तै अरूमा पनि हुनसक्छ । तर यस परम्परालाई तोड्नु पर्ने अहिलेको आवश्यकता हो । गैर आवासीय नेपाली संघ नेपाल सरकारले स्वीकृति प्रदान गरेको संस्था हो । विदेशमा बस्ने नेपालीहरूको साझा संगठन हो । हामीले नेपाल सरकार समक्ष दोहोरो नागरिकता लगायत थुप्रै मागहरू पेश गरेका छौं । हाम्रो नेपालमा घरजग्गा छ, जमीन छ, उद्योग छ, कलकारखाना लगायत सम्पत्ति छ, त्यसलाई जोगाउनु पर्छ । हाम्रो भाषा, कला र संस्कृतिलाई संरक्षण गर्नुपर्छ । हामीसंग भएको ज्ञान, सीप र धनलाई सुरक्षित तवरले नेपालमा भित्र्याउनु पर्छ । भूतपूर्व गोर्खा समुदाय लगायतका थुप्रै मागहरू छन् । ती मागहरूलाई पुरा गर्न एक व्यक्ति वा संस्थाको आवाजले मात्र संभव छैन । त्यसका लागि विदेशमा बस्ने नेपालीहरू एकबद्ध हुन जरूरी छ ।

सबै नेपालीलाई एउटै छाता मुनि ल्याउन सक्ने संस्था भनेको एनआरएनए नै हो । यो पवित्र संस्थाको दुई वर्षको जम्मा १० पाउण्ड मात्र सदस्यता शुल्क तिरेर सदस्यता बनिदिनुहोस् भनी अनुरोध गर्दा समेत सदस्यता बन्नेको संख्या औंलाले गन्न सकिने अवस्था छ । हामीले सदस्यता सम्बन्धी जानकारी राम्ररी बुझाउन नसकेको हो कि? उहाँहरूले गम्भीरतापूर्वक नलिएको हो ? त्यो भने अध्ययन गर्नुपर्ने बेला आएको छ । यदि हामीले बेलायतमा एनआरएनएबारे जानकारी गराउन नसकिएको हो भने पनि यसलाई गम्भीरतापूर्वक अध्ययन गरी उत्साहपूर्वक आफै सदस्य बन्ने वातावरण सिर्जना गर्नु पर्दछ ।

अहिले बेलायतमा करीब १ लाख भन्दा बढी नेपालीहरू बसोबास गरीरहेको अनुमान छ । करीब २०० भन्दा बढी विभिन्न जातीय तथा भेगीय नेपाली संघसंस्थाहरू स्थापना भएका छन् । जुन संस्थाले

> सबै नेपालीलाई एउटै छाता मुनि ल्याउन सक्ने संस्था भनेको एनआरएनए नै हो । यो पवित्र संस्थाको दुई वर्षको जम्मा १० पाउण्ड मात्र सदस्यता शुल्क तिरेर सदस्यता बनिदिनुहोस् भनी अनुरोध गर्दा समेत सदस्यता बन्नेको संख्या औंलाले गन्न सकिने अवस्था छ ।



आ–आफ्नो भाषा, कला र संस्कृतिको संरक्षणमा विशेष जोड दिदै मातृभूमि नेपालका लागि समेत सहयोग गर्दै आइरहेको अवस्था छ । जुन एकदमै सकारात्मक कुरा हो । अहिले एनआरएनएको संजाल ८० वटा देशमा फैलिएको छ । जसले गर्दा विश्वका कुनाकुनामा बस्ने नेपालीहरूबीच एकअर्कामा परिचय गराउने र त्यहाँको अवस्थाबारे जानकारी गराउने अवसर दिलाएको छ । विभिन्न पेशा, व्यवसाय तथा आफुसंग भएको ज्ञान, सीप र क्षमताबारे आ-आफ्ना अनुभवहरू आदानप्रदान गर्ने अवसर प्रदान गरेको छ । साथसाथै एनआरएनएले हामीले भोग्दै आएका विभिन्न खालका समस्याहरूलाई सम्बन्धित निकायमा पुर्‍याउनका लागि विशेष भूमिका खेल्दै आइरहेको छ । त्यसैले पनि गैरआवासीय नेपाली संघको महत्व दिनप्रतिदिन बढ्दै गएको छ ।

एकतामा बल हुन्छ' भने झैं हामी सम्पूर्ण बेलायतवासी नेपालीहरू यसै एनआरएनए युकेको छातामुनी आबद्ध भई नेपाली नागरिकताको निरन्तरता, भूतपूर्व गोर्खाहरूले उठाउंदै आएका माग लगायत थुप्रै मागहरूलाई एकजुट भई उठाउने हो भने ती मागहरू पूरा हुनसक्ने बढी संभावना देखिन्छ । विशेष गरी सानै उमेरमा नेपालबाट बेलायत आएका, बेलायतमै जन्मेका नयाँ पुस्ताका छोराछोरी तथा भाञ्जाभाञ्जीहरूलाई गैरआवासीय नेपालीको बारेमा त्यति जानकारी छैन । उनीहरूलाई गैरआवासीय नेपालीहरु बारे, हाम्रा भाषा, कला र संस्कृति बारे जानकारी गराउदै यस संस्थाले खेल्न सक्ने भूमिका बारे जानकारी गराउनु पर्ने आवश्यकता देखेको छु ।

नयाँ पुस्ताका युवाहरू एनआरएनए युके भित्र आबद्ध नहुनु भनेको एनआरएनए युके बारे उनीहरूलाई जानकारी नहुनु हो । तर नेपालमै आफ्नो महत्वपूर्ण जीवन बिताएर आएका नेपालीहरूले समेत एनआरएनए युकेलाई नजिकबाट चिन्न नसक्नुको कारण खोज्नु पर्ने अवस्था आएको छ । केवल निर्वाचनको अवस्थामा मात्र सदस्यता बन्ने र बनाउने चलनले निरन्तरता पाइरहने हो भने एनआरएनएको यात्रा छिट्टै टुंगिने देखेको छु । यदि एनआरएनएको यात्रा बीच बाटोमै बिलायो भने विदेशी भूमिमा नेपाली भाषा, कला र संस्कृति कसरी जीवन्त रहला ? हाम्रो पहिचान, हाम्रो नेपालीपन र नेपाली मन कसरी बाँच्ला? हामीले माग गर्दै आएको नागरिकताको निरन्तरता लगायतका मागहरू कसरी संवोधन होलान् ? त्यतिमात्र होइन, हामी कमजोर भयौं भने अहिले नेपालको संविधानले व्यवस्था गरेको गैरआवासीय नेपाली नागरिकता समेत सहजै पाउने अवस्था रहने छैन । त्यसैले एनआरएनएलाई बलियो बनाउन अत्यन्त जरूरी छ ।

अन्त्यमा, एनआरएनए युके भनेको हामी सबै बेलायतवासी नेपालीहरूको साझा संस्था हो । तर, सदस्य बिनाको संस्थाको कुनै औचित्य हुंदैन । तसर्थ सम्पूर्ण बेलायतवासी नेपालीहरूलाइ १ वर्षको जम्मा ५ पाउण्ड अर्थात् दुई बर्षको १० पाउण्ड तिरी संस्थाको सदस्य बन्न म अपील गर्दछु । ●

अहिले नेपालको संविधानले व्यवस्था गरेको गैरआवासीय नेपाली नागरिकता समेत सहजै पाउने अवस्था रहने छैन । त्यसैले एनआरएनएलाई बलियो बनाउन अत्यन्त जरुरी छ ।

# गैरआवासीय नेपाली, विदेशमा अवैतनिक दूत



रमेशसिंह सराङकोटी मगर
प्रवक्ता, गैर आवासीय नेपाली संघ

विकिपेडिया स्रोत बमोजिम युनाईटेड नेशन्समा दर्ता भएका २०६ वटा देश मध्ये अगष्ट २०१९ मा नेपालको परराष्ट मन्त्रालयको प्रोटोकल विभागबाट प्रकाशित List of Diplomatic and Consular Corps and Other Representatives पुस्तकमा हालसम्म नेपाली राजदूतावास विदेशका तीस देशमा मात्र संचालित छन् तथा अहिलेसम्म ६ वटा कन्सुलेट जनरल रहेको देखिन्छ । मुख्यतया विदेशमा रहेका कुनै पनि नेपालीलाई परराष्ट्र मन्त्रालय अन्तर्गतको राजदूतावासले दिनुपर्ने विभिन्न सेवाहरू त दिइराखेकै छन् । दैनिक प्रशासनिक कार्यको बावजुद हरेक राजदूतावासले आफ्नो सामर्थ्यले भ्याएसम्म नेपाल र नेपालीको नाम सम्बन्धित देशमा तथा सो क्षेत्रहरूमा उचो राख्न कूटनैतिक रूपमा अहोरात्र खटिरहेकै छन ।

आजको भूमण्डलीकरणको युगमा राष्ट्रको भूभाग तथा क्षेत्रफल कति ठूलो सानो भनेर तुलना भन्दा पनि राज्य आर्थिक, सामरिक, संचार, प्रजातन्त्र तथा कूटनैतिक हिसाबले कत्तिको सामर्थ्यवान छ भन्ने कुराले बढी महत्व राखेको देखिन्छ । उदाहरणको लागि बेलायत नेपाल भन्दा झण्डै डेढ गुणा (१.६४) मात्र ठूलो छ, तर आर्थिक, सामरिक, संचार तथा कूटनैतिक हिसाबले बेलायत विश्वकै उच्च कोटिको देशहरूमा पर्दछ । यहां प्रश्न रहन्छ के नेपाल र नेपालीको सर्वागीण विकासका लागि राज्यबाट चालिएको कूटनैतिक नियोगको स्थापना तथा संचालनका कदम पर्याप्त छन् ? हामी अरू देशहरूमा थप नेपाली राजदूतावास खोल्न आर्थिक तथा कूटनैतिक हिसाबले सबल र सक्षम छौं ? वा हाम्रो जस्तो भूपरिवेष्टित राष्ट्रलाई बहुराष्ट्रिय सम्बन्ध स्थापना तथा विकास भन्दा छिमेकी राष्ट्रहरूसंग प्रगाढ मित्रता तथा सन्तुलन बनाइराख्नु बढी महत्वपूर्ण हो । यी सबै छलफलका विषयहरू हुन् र व्यक्तिको वैयक्तिक सोचको आधारमा यसका आआफ्नै उत्तरहरू होलान् ।

नेपाल आर्थिक विकासको चरणमा कोल्टे फर्कने क्रममा रहेको र राज्यमा यी माथिका विषयवस्तु भन्दा पनि अन्य तत्कालिक समस्या तथा विकासका कार्यहरू प्राथमिकतामा होलान् ।

मेरो लेखको मुख्य आसय राज्यले के गर्यो, के गरेन र के गर्नु पर्थ्यो भन्ने भन्दा पनि झण्डै विश्वका विभिन्न ७८ देशहरूमा गैर आवासीय नेपाली संघ स्थापना भई संगठित रूपमा संचालन भइरहेको छ । विदेशमा बसेका नेपालीहरूले आफनो दैनिक ब्यस्तताका बावजुद बचेको केही समय विदेशमा रहेका नेपालीहरूको सुख दुखमा एकबद्ध भई कार्य गरिरहेको तथा विदशमा पनि नेपाली भेष, भाषा, संस्कार, संस्कृति, पर्यटन र मुलुकलाई चिनाउन विभिन्न कार्यहरू निरन्तर गरिरहेको हुंदा कसरी गैर आवासीय नेपाली संघले कूटनैतिक प्रवर्द्धनमा कार्य गरिरहेका छन् र थप के गर्नु पर्छ भनेर चर्चा गर्न खोजिएको मात्र हो ।

विदेशस्थित स्थानीय जनता, समूह, निकाय र समुदायसँग राजदूतावाससँग सीधै सम्पर्क गर्न त्यति सहज हुन सक्दैन । त्यस्तो अवस्थामा गैर आवासीय नेपाली संघले यसमा ठूलो भूमिका खेलेका छ । म आफै पनि बेलायतमा बसोबास गर्ने भएकोले केहि दृष्टान्त पेश गर्दछु । अन्य देशमा बसोबास गरेका सबै गैर आवासीय नेपालीमा यो शत प्रतिशत लागू नहुन सक्छ ।

बेलायतसंग नेपालको संबन्ध २०० वर्ष देखिको छ । यसमा गोर्खाहरूको सम्बन्धदेखि लिएर जंगबहादुर राणा सम्मको यात्रा र इतिहास निकै चाखलाग्दो छ ।

अहिले हेर्ने हो भने बेलायतमा करिब १ लाख ५० हजार नेपाली रहेकोमा ७०, ८० प्रतिशत गोर्खाहरूको रूपमा आई बसोबास गरेको देखिन्छ

> बेलायतमा करिब १ लाख ५० हजार नेपाली रहेकोमा ७०, ८० प्रतिशत गोर्खाहरुको रुपमा आई बसोबास गरेको देखिन्छ भने अरु २०, ३० प्रतिशत रेष्टुरेन्ट कर्मचारी, विद्यार्थी, उच्च दक्ष, व्यवसाय गर्दै र अरु विभिन्न तरिकाले आएको देखिन्छ ।

भने अरू २०, ३० प्रतिशत रेष्टुरेन्ट कर्मचारी, विद्यार्थी, उच्च दक्ष, व्यवसाय गर्दै र अरू विभिन्न तरिकाले आएको देखिन्छ । अहिले बेलायतमा करिब २०० देखि २५० नेपाली संघसंस्थाहरू क्रियाशील छन् । तिनीहरू जातिगत, पेशागत, क्षेत्रगत, जिल्लागत, राजनीति, इन्टेक आदिको आधारमा स्थापित छन् । यी सबैलाई समेट्दै एउटा साझा संस्थाका रूपमा गैरआवासीय नेपाली संघ बेलायतको स्थापना तथा विकास भएको छ ।

अहिले बेलायत र नेपालको सम्बन्ध हेर्दा गोर्खाहरू मुख्य कडीका रूपमा देखिन्छन् । अन्य कुराहरू यथावत रहेमा जबसम्म गोर्खा भर्ति निरन्तर रहन्छ, तबसम्म बेलायत र बेलायती जनतालाई नेपाल र नेपालीको परिचय दिन गोर्खाको चिनारीले प्रमुख भूमिका खेल्ने देखिन्छ ।

यही देशबाट छलफल गरेर शुरू भएको हुंदा युकेलाई गैरआवासीय नेपाली संघको जननी भनेर पनि चिनिन्छ । डेढ दशकभन्दा लामो इतिहासमा एनआरएनभित्र पनि विभिन्न आरोह अवरोह आए । तर संसारभरी फैलने तथा स्थापना हुने क्रम भने निरन्तर रहिरहयो । एनआरएन युकेले पनि स्थापना पश्चात विभिन्न आरोह अवरोह झेल्दै एक साझा संस्थाका रूपमा देढ दशकदेखि आफुलाई स्थापित गरेको छ ।

पूर्णरूपमा सामाजिक संस्था भएता पनि एनआरएन युकेले गरेका कार्यहरू छोटकरीमा प्रस्तुत गर्न चाहन्छु । हालका दिनहरूमा नेपाली जात जातिको भेषभुषाको प्रवर्द्धन तथा विकास गर्न, नेपाली भाषा लेखपढ गर्न विभिन्न संस्थाहरूले खेलेको भूमिकामा एनआरएनए युकेले थप टेवा प्रदान गरिरहेको छ ।

शान्तिका अग्रदूत गौतम बुद्ध नेपालमा जन्मेका हुन भन्दै बेलायतका मुख्य शहरमा गरिने प्रायजसो सबै कार्यक्रममा एनआरएन युकेको संलग्नता भएको देखिन्छ । अर्को कुरा आफना बालबालिकालाई नेपालमा लगेर होस् वा विभिन्न प्रवर्द्धनात्मक कार्य गरेर होस् भिजिट नेपाल २०२० को प्रचारप्रसारमा पनि एनआरएन तथा त्यसलाई प्रवर्द्धन गर्न एनआरएन युकेले नेपाली दूतावाससित मिलेर काम गरिरहेको छ । तत्काललाई यो कार्य सानो देखिएता पनि बेलायतमा जन्मेका दोश्रो पुस्ताका नेपाली नानीहरूलाई नेपाल र नेपालीसंग भावनात्मक रूपमा जोडन ठूलो महत्व राख्दछ ।

नेपाली गीत, संगीत, नृत्य, साहित्य एवम नेपाली चलचित्र बेलायती भूमिमा तीव्र गतिमा विकास तथा उर्वर भइरहेको छ भन्नु अत्युक्ति नहोला। ।

गोर्खाहरूलाई सम्मान तथा समान अधिकारका लागि विभिन्न संस्थाहरूसंग सहकार्य तथा एनआरएनए युकेले खेलेको भूमिका आफैमा एक उदाहरण हो । एनआरएनए युकेले प्रस्तुत गर्ने विज्ञप्ती होस वा अन्तर्कियि, गोर्खाको विषयलाई सधै प्राथमिकतामा राखेको छ ।

'एक पटकको नेपाली संधैको नेपाली" भन्ने नारालाई आत्मसात गर्दै नेपाली भएर जन्मे पछि नेपाली भएर मर्न पाउं भनी नागरिकता निरन्तरता अभियानका लागि नेपाल सरकारसंग गरिएको अनुरोधमा हाल प्रथम चरणको सफलता स्वरूप गैर आवासीय नेपाली नागरिकता संविधानमा सुनिश्चत

अब एनआरएनएले बेलायत संस्थागत विकासको साथसाथै त्यहाँका नेपालीहरुलाई हेर्ने दायित्व पनि पूरा गरेको छ । जस्तै त्यहाँ बसेका नेपालीहरुलाई, नानीहरुलाई आफ्नो भाषा नबिर्सियोस भनेर भाषा कक्षाहरु विभिन्न संघसंस्थाले सञ्चालन गरेका छन् ।



गराउन सफल भएको छ ।

त्यस्तै बेलायतका नेपालीहरू व्यक्तिगत तथा स-सानो समूहको रूपमा मिलेर नेपालमा लगानी शुरू गरेका छन् । त्यो भलै उहाँहरूको व्यक्तिगत फाइदा होला तर त्यसबाट नेपाल र नेपालीलाई पनि अवश्य केही फाइदा नै हुने छ । हालका दिनहरूमा प्रत्यक्ष वैदेशिक लगानीअन्तर्गत नेपालीहरूले खोलेका केही कम्पनीहरूले नेपालमा ठूलै लगानी गर्न पनि शुरू गरिसकेका छन्। विभिन्न उच्च दक्ष पेशामा रहेका बेलायतवासी नेपालीहरूले लगानी तथा संस्थागत कार्यक्रमको माध्यमबाट प्रत्यक्ष तथा परोक्ष रूपमा सीप स्थानान्तरण कार्य शुरू नै भईसकेको छ ।

नेपालीहरूलाई बेलायतमा आत्मसम्मानका साथ जीवनयापन गर्न, स्थानीय निकायहरूसंग सहकार्य गर्दै नेपालीहरूको मर्मलाई बुझेर स्थानीय राजनीतिमा नेपालीहरूको संलग्नता वृद्धि गर्न तथा नेपाल र नेपालीसंग सरोकार राख्ने रणनीतिक कार्यहरूमा एनआरएनए युकेले विभिन्न निकायहरूसंग मिलेर सहकार्य गरिराखेको छ । जस्तै सन् २०२१ मा युकेमा जनगणना हुँदैछ । त्यो जनगणनामा नेपालीहरूलाई अन्य एसियन समूहमा नराखी नेपाली भनेर अलग्गै राख्न र अलग पहिचानका लागि विभिन्न दबाब समूहसंग मिलेर बेलायतका प्रधानमन्त्रीलाई ज्ञापनपत्र बुझाएको छ ।

विभिन्न नेपाली तथा बेलायती संघसंस्थासंग समन्वय गरिराखेको छ भने अन्य संघसंस्थाले उठाएका तर सम्बन्धित निकायले नसुन्ने सवालहरूमा एनआरएनए युकेले थप लबिङ गरिराखेको छ । त्यो नै यसको उपलब्धी हो ।

एनआरएनए युकेले नेपाल वायुसेवा निगमको काठमाण्डौ लन्डन सीधा हवाइ उडानका लागि लबिङ गरिराखेको छ । यसबाट देशलाई पनि विभिन्न आयामबाट फाइदा हुने, वायुसेवालाई पनि फाइदा हुने, नेपाली तथा बेलायती यात्रुलाई पनि सुविधा हुनेछ । अर्को कुरा गैरआवासीय नेपालीलाई राजनीतिक अधिकारबिनाको नागरिकता दिने भन्ने नयाँ संविधानमा व्यवस्था गरिएको छ । यसको कार्यान्वयन सरल र सहज तरिकाले एम्बेसी मार्फत हुनुपर्छ, साथै एक पटकको नेपाली संधैको नेपाली भन्ने भावनालाई कदर गर्दै नागरिकता निरन्तरताको थप ब्यवस्था हुनुपर्छ भन्ने हाम्रो अनुरोध हो ।

एनआरएनए युकेले जति गर्नुपर्ने हो र जति उचाइ लिनुपर्ने हो लिन नसके तापनि अहिले संसारभर सबैभन्दा बढी सदस्य बनाउने एनसीसीका रूपमा स्थापित भएको छ । त्यसवापत एनआरएनए युकेले एनआरएनए आइसिसीलाई सबैभन्दा बढी सदस्यता शुल्क बुझाउँछ । यसरी एनआरएन आइसीसीलाई आफ्नो भूमिका निर्वाह गर्न एनआरएनए युकेले महत्वपूर्णरूपमा सहयोग र सहकार्य पनि गरिरहेको छ । एनआरएनए युकेले कुनैपनि दूरगामी प्रभावका विषयमा छलफल एवम निर्णय गर्दा आफुलाई मात्र भनेर निर्णय गर्दै,न बरू यसले अरू एनसिसीमा कस्तो प्रभाव पार्छ र यो एक उदाहरणीय रूपमा प्रस्तुत हुने तरिकाले भयो या भएन भनेर समीक्षा समेत गर्दछ ।

एनआरएनलाई धनीहरूको संस्था हो भन्ने दोष पनि लाग्ने गर्दथ्यो । त्यो कुरा बेलायतमा अहिले वर्तमान अध्यक्ष योगकुमार फगामीले तोड्नु भयो । उहाँ सामान्य आर्मी पृष्ठभूमिको हुनुहुन्छ । अहिले काउन्सिलमा कर्मचारी हुनुहुन्छ । पहिला बेलायतमा एनआरएनको एउटै केन्द्रीय संस्था थियो भने अहिले चारवटै राज्यभित्र राज्य समितिको चुनाव तथा गठन हुँदैछ । यसरी एनआरएनए युके आफै भित्रपनि विकेन्द्रीकरणको नयाँ स्वरूपमा संस्थागत विकास हुँदैछ ।

अन्य देशका गैर आवासीय नेपाली संघ तथा गैर आवासीय नेपालीहरूको अवस्था र बेलायतको पृष्ठभूमि तथा परिवेश फरक छ । आवश्यकता तथा स्वरूप फरक फरक होलान् तर सबैले आआफनो सामर्थ्य अनुरूप वैयक्तिक तथा संस्थागत रूपमा नेपाल र नेपालीलाई विश्व मानचित्रमा आफ्नो अलग परिचय दिलाउन आफ्नो समय, मन तथा धन खर्चेर अहोरात्र भूमिका खेलीरहेका छन् । यो स्तम्भकार ती सबै ब्यक्ति तथा संस्थाप्रति श्रद्धाले नमन गर्दछ । नेपाल सरकारले पनि यसलाई मनन गरी नेपाली कूटनैतिक नियोग स्थापना भैनसकेको तर गैर आवासीय नेपाली संघ भएको देशमा संघलाई वा सक्षम तथा सामर्थ्यवान ब्यक्तिलाई छानेर अवैतनिक नेपाली दूतका रूपमा कार्यभार सुम्पेमा एकैसाथ धेरै देशमा कूटनैतिक नियोगको शुरूवातका लागि प्रारम्भिक आधार तयार हुने र देशमा ठूलो चामत्कारिक परिवर्तन नल्याए पनि केही न केही सहयोग चाहिँ अवश्य पुग्नेछ ।

सीप, क्षमता, ज्ञान तथा आर्थिक हिसाबले विश्वका सबै देशहरूको आआफ्नै पहिचान तथा महत्व छ । नेपाल सरकारले विभिन्न कारणले नियोग स्थापना गर्न भ्याइनसकेको देशमा गैर आवासीय नेपाली संघसंग सहकार्य तथा परिचालन गर्न सकेमा यी अवैतनिक दूतहरूले नेपाल सगंको दुईदेशीय कूटनैतिक सम्बन्ध स्थापना गर्ने क्षेत्रमा एक महत्वपूर्ण कोशेढुगां सावित हुनेछ ।

विश्वको कुनै पनि देश वा कुनामा बसेका नेपालीहरू स्वयंमा नेपालको अवैतनिक दूत हुन् र आ आफ्नो सामर्थ्य बमोजिम नेपाल र नेपालीलाई संसारमा प्रवर्धन गरिनै रहेका छन् र निरन्तर गरिनै रहनेछन् । ●

> नेपालीहरुलाई बेलायतमा आत्मसम्मानका साथ जीवनयापन गर्न, स्थानीय निकायहरुसंग सहकार्य गर्दै नेपालीहरुको मर्मलाई बुझेर स्थानीय राजनीतिमा नेपालीहरुको संलग्नता वृद्धि गर्न तथा नेपाल र नेपालीसंग सरोकार राख्ने रणनीतिक कार्यहरुमा एनआरएनए युकेले विभिन्न निकायहरुसंग मिलेर सहकार्य गरिराखेको छ ।

# नागरिकता निरन्तरता तथा कानुन विभागको रिपोर्ट



तारानाथ भण्डारी

१. 'एक पटकको नेपाली, संधैको नेपाली' भन्ने एनआरएनएको मूल मर्मलाई मध्यनजर गर्दै यस विषयसंग सम्बन्धित वकिल, अधिवक्ता ,बुद्दिजिवी, नेता, मन्त्रीगण तथा अन्तर्राष्ट्रिय समन्वय समितिसंगको समन्वयमा नेपाल सरकार र सम्बन्धित निकायमा छलफल र बिचाराधीन रहेको यस मुद्दालाई पूर्णता दिन युकेबाटै पहल गरियो ।

२. गैरआवासीय नागरिकताको सम्बन्धमा संसदीय समितिले मागेको सुझाव संकलन गरी सम्बन्धित निकायमा प्रस्तुत गरियो ।

३. युके भित्र विभिन्न गोष्ठी, अन्तर्कृया गरी सबैलाई सुसूचित गर्ने र सुझाव संकलन गर्ने कार्य गरियो।

४. युके भित्रका सम्पूर्ण नेपालीहरूको जनगणनालाई मध्यनजर गर्दै नेपालीहरू लाई युकेको जनगणनामा समावेश गर्नुपर्छ भनी हस्ताक्षर संकलन गरी बेलायती प्रधानमन्त्रीको कार्यालय १० डाउनिङ स्ट्रीटमा पेस गरियो ।

५. गैर आवासीय नेपाली संघ युकेलाई च्यारिटी हाइकमिसनमा दर्ता गर्ने प्रक्रिया अघि बढाइयो।

६. एनआरएन युकेलाई यहीँ छरिएर रहेका सामाजिक संघसस्थाहरूसंग समन्वयकारी भूमिकाको प्रमुख संवाहक बनाउने उद्देश्यले मिड्ल्याण्डमा रहेका संघसस्थाहरूसंगको समन्वयमा द भोइस अफ नेपाल सो जस्ता च्यारिटी र देशभक्ति झल्काउने कार्य सुसम्पन्न गरी मिड्ल्याण्डलाई एनआरएनको महत्वपूर्ण भागका रूपमा विकसित गरियो ।

गैर आवासीय नेपाली संघ युकेका सचिव भण्डारी नागरिकता निरन्तरता तथा कानुन विभागका संयोजक पनि हुन् । ●

# गैरआवासीय नेपाली संघ राज्य समन्वय परिषद्, वेल्सको प्रतिवेदन



▶ राम चन्द्र पोखरेल

अध्यक्ष, गैरआवासीय नेपाली संघ
बेलायत राज्य समन्वय परिषद्, वेल्स

आआफ्नै परिवेशले विदेशिएका तपाई हामी कोही विद्यार्थीका रूपमा त कोही काम गर्ने सिलसिलामा वर्क पर्मिट लिंदै त कोही बेलायत-भारत-नेपाल सम्झौताले (त्रिपक्षीय सन्धि १९४७) शुरू गरेको गोर्खा भर्तीको बाटो त कोहि अन्य बाटो हुंदै यस विदेशी माटोमा रम्न र जम्न सफल भयौं भने अर्कोतिर विभिन्न परिवेशले जेलिएर दब्न पनि वाध्य भएका छौं । रहरले भनौं या करले या भनौं आ आफ्नै खालका वाध्यताले ।

हामीमध्ये धेरैजसो नेपालीहरू नेपालमा रहँदा गास, वास र कपासको उकुसमुकुस लाग्दो समस्याबाट छुटकारा पाउँदै जीवनलाई अलिकति भएपनि सक्षम बनाउंदै राहत लिने र दिने लोभ मनमा पालेर दुई चार पैसा कमाउने आशामा विदेशिनु पर्यो भने कैयौं हामी नेपालमा भए गरेका र लिएका शिक्षा र सीपमा अझ बढी शिक्षित हुदै आफ्नो काममा अझ बढी दख्खल हुने अभिलाषाका साथ विश्वका विभिन्न देशमा विभिन्न रूपमा ठोक्किन पुग्यौ ।

समय बित्दै जाँदा नेपालमा जस्तै विदेशमा पनि गास, वास र कपासको जोहो गर्दै वर्ष पछि वर्ष गुज्रिंदै गए । वासस्थानको व्यवस्था, बालबच्चाहरूको पढाइ, दिनानुदिनको कार्य व्यस्ततालाई सहज बनाउने उद्देश्यले किनिएको एउटा पुन्टे कार हुँदै आफ्नै भन्न मन लाग्ने एउटा सानो घर जोड्दै विदेश बसाइको चाँजोपाँजो मिलाउंदै जाँदा र जीवनका संघर्षलाई आफ्नो दैनिकी बनाउंदै अगाडी बढ्दै जाँदा समय बितेको पत्तै भएन । कैयौं व्यवधानहरूसंग सिंगौरी खेल्दै जाने क्रममा कतिपय दिनानुदिनका कामहरू अलिक सहज होस् भन्ने हेतुले कतिपयले यतैको आवासीय भिषा (Permanent Residency) लिए त कतिले रातो पासपोर्ट। यताको चाँजो पाँजो मिलाउँदा मिलाउँदै केही बर्ष पहिला मात्रै छाडेर आएको जन्मभूमि सँगको सम्बन्ध बिस्तारै बिस्तारै पातलो हुँदै गएछ, उसलाई लाई पत्तै भएन ।

धेरै दुख गरेर बिदेशमा कमाएको पहिलो तलब र त्यसबाट जोडेका केही चल, अचल सम्पत्तिमा सपना सजाउँदा सजाउँदै र मनमा खेलाउँदा खेलाउँदै त्यसको स्वामित्वमा आईपरेका प्रश्न चिन्ह यदा कदा सल्बलाउन थालेछ । अनि लाग्न थाल्यो की कतै भुँईको टिप्न खोज्दा पोल्टाको त पोखिंदै छैन ? विदेशी भूमिमा पाउण्ड र डलरको ऋण चुक्ता गर्ने कागजको हिसाबकिताब गर्दै जाँदा जन्मथलोको आफ्नो रगत र पसिनाले आर्जेर जोडेका सुकी र मोहरहरू बिस्तारै बिस्तारै बिलाउन खोज्दै त छैनन् ?

विदेशी भूमिमा पाउण्ड र डलरको ऋण चुक्ता गर्ने कागजको हिसाबकिताब गर्दै जाँदा जन्मथलोको आफ्नो रगत र पसिनाले आर्जेर जोडेका सुकी र मोहरहरु बिस्तारै बिस्तारै बिलाउन खोज्दै त छैनन् ?

पोल्टाको पोखिंदै गएको ज-जसले पत्तो पाए उनीहरूले लड्दैछन् अनि यदाकदा सफलता मिल्न खोजेकोमा अलिकति खुशी हुँदै अझै लड्दैछन ती अग्रजहरू । सलाम छ ती अग्रजहरूलाई जसले आफ्नो व्यक्तिगत स्वार्थ भन्दा माथि उठेर समाजको स्वार्थलाई आत्मसात गर्दै भोक, थकाइ र व्यस्ततालाई एकातिर पन्छाएर लगातार लडिरहेका छन् । आखिर उपलब्धि हासिल भएमा त्यो उपलब्धि उनीहरूका लागि मात्र नभएर प्रत्यक प्रवासी नेपालीका लागि हुनेछ, त्यसमा कुनै दुई मत छैन ।

देशमा बसौ या बिदेशमा, आम जनताले पाउने अधिकार मागेर सजिलै पाउन गार्हो छ, त्यसैले नै संघर्षको जन्म हुन्छ । त्यस खालका संघर्षहरू एक्लैले वा केही सीमित व्यक्तिले मात्रै गरेर सम्भव छैन। कैयौं मुद्दाहरू जन्मभूमिसंग सम्बन्धित होलान् त कैयौं मुद्दाहरू कर्मभूमि संग सम्बन्धित होलान् । आखिर हाम्रो बल भनेको संगठित हुँदै मजबुत संगठनको माध्यमबाट आफ्ना हक र

अधिकार प्राप्तिका लागि एक्यबद्दता जनाउंदै, होस्टेमा हैंसे गर्दै, एक आपसमा सहयोग गर्नुको विकल्प छैन । यस्ता खालका काममा सफलताको लागि असल र अनुभवी चालकको आवश्यकता पर्दछ । अहिलेको अवस्थामा त्यो चालक भनेको गैरआवासीय नेपाली संघ देखिन आएको छ ।

गैरआवासीय नेपाली संघ नेपाल सरकारले मान्यता दिएको संस्थाको रूपमा स्थापित भएकाले नेपालको विभिन्न कानुनी सरोकारमा समेत नेपाल सरकारले गैरआवासीय नेपाली संघसंग समन्वय गर्ने वातावरण स्थापित भएको छ । त्यतिमात्र नभएर गैरआवासीय नेपाली संघ विश्वका करिब ८० देशमा विस्तार भएको छ । यसमा रहेका अनुभवी, कर्मठ तथा शिक्षित व्यक्तित्वहरूसंग हातेमालो गर्न सकेमा आम प्रवासी नेपालीहरूका कैयौं मुद्दाहरू विश्वका प्रायस् सबै देशहरूमा सरल र सहज तरिकाले अगाडी बढ्न ठूलो सहयोग मिल्ने देखिन्छ ।

'समृद्ध नेपाल, सुखी नेपाली' भन्ने मूल नाराका साथ सम्पूर्ण प्रवासी नेपालीहरू एक हुँदै गाडी बढेको खण्डमा देश वा विदेशमा लगानीका ढोकाहरू बिस्तारै खुल्दै जाने र यदि लगानी गर्न इच्छुक रहेमा लगानी गर्दै आफु संगसंगै देशलाई समृद्ध बनाउन सकिन्छ। हामी सबैलाई आफ्नो जन्मभूमि र त्यहाँ रहेका हाम्रा दाजुभाइ, दिदीबहिनी, आफन्तजन तथा सन्ततिहरू सुखी र समृद्ध देख्नु छ भने देश विकास हुनु जरूरी छ । तर देश विकास त्यतिकै हुँदैन, पुँजी चाहिन्छ । विश्वमा छरिएर रहेका पुँजी लगानी गर्ने वातावरण तयार गर्नु अहिलेको टड्कारो आवश्यकता देखिन्छ ।

त्यति मात्र नभएर नेपाली कला, संस्कृति र भेषभुषालाई हृदयदेखि आफ्नै सम्झेर माया गर्दै विश्वमा छरिएर बसेका तपाइँ हामीले ती कला र संस्कृतिलाई बचाई राख्न सकेमा नेपाल संगको हाम्रो अविरल माया र सम्बन्ध हाम्रा सन्ततिका पालासम्म पनि प्रगाढ भई बस्नेछ, किनभने तपाइँ हामी जति सुकै विकसित र धनी भएपनि आफ्नो संस्कृति विना हामी अधुरो रहन्छौं ।

नेपाल एउटा रंगीन फूलबारी हो भने हामी जनता ती फूलमा रम्ने रंगीन भमरा र पुतलीहरू हौं । यदि ती रंगिन भमरा र पुतलीहरू बचाई राख्न मन छ भने रंगीन फूलबारी बचाइ राख्न अतिनै आवश्यक देखिन्छ। त्यसैले कुन जात, कुन जिल्ला वा कुन धर्म भनेर विमति गर्नु भन्दा पनि हामी सम्पूर्ण नेपाली सिंगो नेपालीका रूपमा एक ढिक्का हुन सकेमा हाम्रो शान र पहिचान अटल रहने छ र त्यसैमा हामी सबैको भलो हुनेछ।

त्यसैले आउनुहोस सुखमा संगै हाँसौं, दुखमा संगै मजबुत हुँदै अगाडी बढौं। गैरआवासीय नेपाली संघलाई उर्जा थप्दै अर्को उचाइमा पुर्याउनु हाम्रो कर्तव्य हुन आएको छ । किनकि अहिलेका हाम्रा विशेष मुद्दाहरू खासगरी गैरआवासीय नेपाली नागरिकताको सवाल, भूपू गोर्खाका मुद्दाहरू, नेपालसंग सम्बन्धित रहेका सम्पत्ति वा ब्यवसाय र त्यसको संरक्षण, नेपाललाइ सम्वृद्धि को बाटोमा टेवा दिनको लागि गैरआवासीय नेपालीको लगानी, गैरआवासीय नेपाली संघ र यसको सदस्यताको महत्वका विषयमा तथा अन्य कैयौं विषयमा काम गर्न मजबुत हुँदै अगाडि बढ्न टडकारो आवश्यकता देखिएको छ ।

अन्तमा राज्य समन्वय परिषद, वेल्स सम्पूर्ण आदरणीय महानुभावहरूमा यहांहरूले दिनुभएको माया, ममता र सदभावप्रति आभार व्यक्त गर्दछ । ●

समृद्ध नेपाल, सुखी नेपाली' भन्ने मूल नाराका साथ सम्पूर्ण प्रवासी नेपालीहरु एक हुँदै गाडी बढेको खण्डमा देश वा विदेशमा लगानीका ढोकाहरु बिस्तारै खुल्दै जाने र यदि लगानी गर्न इच्छुक रहेमा लगानी गर्दै आफु संगसंगै देशलाई समृद्ध बनाउन सकिन्छ।



# गैर आवासीय नेपाली नागरिकता र राजनीतिक अधिकार



▸ सुरेन्द्र श्रेष्ठ
सल्लाहकार, एनआरएनए आइसिसी

अन्तरिम संविधानले गरेको व्यवस्थाअनुसार पहिलो संबिधान सभाको निर्वाचन पछाडी विभिन्न क्षेत्रमा ख्यातिप्राप्त व्यक्तिहरूबाट सरकारले २६ जना सांसद मनोनयन गर्ने सिलसिलामा अन्तिम अन्तिमतिर केही नेतृत्व स्तरका नेताहरूसंग फोनमा छलफल भयो । मैले विदेशमा बस्ने नेपालीहरूको तर्फबाट कमसेकम एक जना प्रतिनिधित्व गराउन सकियो भने हाम्रो पार्टीलाई सकारात्मक रूपमा लिने थिए भनेको थिएँ । त्यतिबेला मेरो यहाँका हाम्रो पार्टीका अन्य साथीहरूसंग त्यति राम्रो सम्बन्ध थिएन ।

मैले गरेको प्रयासलाई केही साथीहरूले विरोध गरेको पनि थाहा पाएँ । मैले केही नामहरू बारे छलफल चलाउँदा एक जना साथीको नाम सकारात्मक रूपमा लिइएको थियो। त्यतिबेला बेलायतको एनआरएनको अभियानमा लाग्नु भएका पूर्व गोर्खा सैनिक र वामपन्थी झुकाव राख्ने डा चन्द्र लक्सम्बाको नाम प्रस्ताव गरेको थिएँ । त्यतिबेला उहाँ नेपाल नै पुग्नु भएको थियो । वहाँको नागरिकताको प्रमाण पत्र पनि मागेको रहेछ । अघिल्लो रातिसम्म सूचीमा रहेको नाम अन्तिम अवस्थामा निकालिएको बुझियो । वहाँको बदलामा जेएनयुबाट भर्खरै विद्यावारिधि गरेर आएका एक जना डाक्टरको नाम सिफारिस भएको थियो भन्ने बुझियो ।

यदि हामीले अलि अगाडिदेखि सबै जनाले एकै मतले प्रयास गर्न सकेको भए हाम्रो कोशिश सफल हुने थियो । एक जुगमा एकपटक आउने संविधान सभामा विदेशमा छरिएका नेपालीहरूको पनि सहभागिता थियो भन्न पाउने थियौँ । इतिहासमा यो एउटा राम्रो उदाहरण पनि हुने थियो । दोश्रो संविधान सभामा भने खै किन हो हामीले यो विषयमा प्रवेश नै गरेनौँ ।तर त्यतिबेला नै मैले नेपालको सदनमा विदेशमा बस्नेहरूको प्रतिनिधित्व हुनु पर्दछ भन्ने एउटा लेख भने लेखेको रहेछु । त्यो लेख म यहाँ पनि सान्दर्भिक देखिएकाले प्रस्तुत गर्न चाहन्छु ।

'गैर आवासीय नेपालीहरूले आफ्नो संस्थाको स्थापनासँगै महत्वका साथ उठाउँदै आएको दोहोरो नागरिकता निरन्तरताको मागलाई पहिलो संविधान सभाको संविधान निर्माण गर्ने क्रममा उठेका मतभेदहरू हटाउन बनेको उच्चस्तरीय कार्यदलले गरेको निर्णयले केही भरोसा जगाएको थियो । उक्त कार्यदलले बनाएको सहमतिअनुसार अब विदेशी नागरिकता लिएका नेपालीहरूले 'गैर आवासीय नेपाली'नागरिकता पाउने छन् । राजनीति बाहेक अन्य अधिकार पाउने यस प्रकारको नागरिकता परिचयपत्रभन्दा एक कदम अगाडि रहेको कुरामा दुईमत छैन । यसलाई कानूनी रूपमा व्यवस्थित गर्न केही समय लाग्नेछ । यस लेखमार्फत मैले विवादित बन्न थालिसकेको यो विषयको पक्ष वा विपक्षमा मत जाहेर गर्नुभन्दा यौटा नयाँ विकल्प प्रस्तुत गर्ने प्रयास गर्नेछु । राजनीतिक अधिकार विनाको नागरिकता दिने सहमतिलाई 'कालो दिन'को संज्ञा दिन पर्ने समेतका तर्कहरू सुनिन थालेको छ । आखिर मत दिने वा उम्मेदवार बन्ने अधिकारसहितको नागरिकता पायौँ भने पनि हामीमध्ये कतिले त्यसमा सहभागी बन्न सक्छौँ ? त्यो अहम् विषय बन्ने छ ।

हामी विदेशमा बस्नेहरूले नेपालको चुनाव क्षेत्रमा गएर आफ्नो नेतालाई भोट दिएर जिताउनुको सैद्धान्तिक महत्व देखिँदैन । आफूले बनाएको प्रतिनिधिले आफ्नो वास्तविक प्रतिनिधित्व गर्न सक्दैन भने त्यसको अर्थ रहँदैन । बरू विदेशमा बसेर नेपालमा राजनीतिक रूपमा विशेष गरी चुनावमा मात्र सहभागिता देखाउँदा त्यसले नकारात्मक प्रभाव पर्न जाने हुन्छ । फलानाले त फलानोलाई भोट

> अहिले जुन संख्यामा नेपालीहरु बाहिर लाग्ने क्रम बढेको छ त्यो निकट भविष्यमा नै कम हुने देखिँदैन बरु झन् बढ्ने सम्भावना छ । नेपाली नागरिक हुँदा नै आफूले पाएको राजनीतिक अधिकारलाई ठूलो हिस्साले उपभोग गर्न पाइरहेका छैनौं ।

हाल्नु भनेको छ भन्दै वहकावमा लाग्ने सम्भावना बढ्नेछ । त्यस्मा पनि हाम्रो जस्तो राजनीतिक संस्कारको विकास भैनसकेको राष्ट्रमा थुप्रै क्षेत्रमा यसले असर पार्नेछ । तर जो साँच्चिकै आफूलाई राजनीतिमा सक्रिय बनाउन चाहन्छ, जिम्मेवारी लिन चाहन्छ, ऊ विदेशमा नबसी स्वदेशमा नै जानेछ र निश्चित प्रक्रियापछि सम्पूर्ण राजनीतिक अधिकार पाउने नै छ । अहिले जुन संख्यामा नेपालीहरू बाहिर लाग्ने क्रम बढेको छ त्यो निकट भविष्यमा नै कम हुने देखिँदैन बरू झन् बढ्ने सम्भावना छ । नेपाली नागरिक हुँदा नै आफूले पाएको राजनीतिक अधिकारलाई ठूलो हिस्साले उपभोग गर्न पाइरहेका छैनौँ । बहुतै कम संख्यामा विशेष गरी भारतमा चिन्ह लगाएको देखिनेछ ।

यसबाट के स्पष्ट हुन्छ भने हामीले अधिकारको रूपमा पाएको सुविधाले नै गलत निर्णयहरू पनि हुन सक्नेछन् । प्रवासी नेपालीहरू जहाँ बसेका छन् केही छाडेर प्राय सबैले कुनै न कुनै समस्याहरू झेलिरहेका छन् । प्रायः यस्ता समस्याहरू राज्यस्तरबाटै समाधान गर्नुपर्ने हुन्छ । व्यक्ति वा समाजको सक्रियताले त्यस्ता समस्याहरू समाधान नहुन सक्छ । त्यस्तो अवस्थामा विदेशमा बस्ने नेपालीहरूको समस्याको प्रतिनिधित्व नेपाल सरकारसमक्ष पुर्याउन आवश्यक हुन्छ । त्यसबाट मात्र नेपाल सरकार र सम्बन्धित सरकारबीच कुटनीतिक सम्पर्कबाट त्यस्ता समस्याहरूको



बसोवास गर्ने नेपालीहरू चुनावको बेलामा मत हाल्न नेपाल जाने गर्दछन् । अन्य देशमा बस्नेहरू त भोट हाल्न जाने कमै सम्भावना हुन्छ । विकसित देशहरूले त संसारभर बसेका आफ्ना नागरिकलाई चुनावमा पोस्टल भोट हाल्ने व्यवस्था मिलाएको हुन्छ । हाम्रो देशमा त बहुतै संवेदनशील विषयहरूमा जनमत संग्रह भयो भने पनि त्यो व्यवस्था हुने सम्भावना देखिँदैन जसको उदाहरण एक जुगमा एक पटक हुने (भएको) संविधानसभाको निर्वाचनबाट पनि स्पष्ट भैसकेको छ । तर विडम्वना प्रत्येक पटकको निर्वाचनको भोटर लिष्ट पल्टाएर हेर्ने हो भने प्रायः सबै विदेशमा बस्नेहरूको नाम अगाडि भोट हालेको समाधान गर्न सरल हुनेछ । अहिले नेपालीहरूले विदेशमा भोगिरहेका समस्याहरू प्रायजसो विदेशमा आएका नेताहरूलाई सुनाउने तथा कुनै संस्थाको प्रतिनिधि मण्डलले नेपालमै गएर नेताहरूलाई सुनाउने गरिन्छ । जसले गर्दा अति नै महत्वपूर्ण विषयहरू पनि सम्बन्धित क्षेत्रमा पुग्न ढिलाई हुने भइरहेको छ । हामीलाई दिएको राजनीतिक अधिकार प्रयोग गरेर हामीले नेपालमा गएर वा विदेशमै बसेर नेपालमा बस्ने नेताहरूलाई आफ्नो प्रतिनिधि बनाएर यो समस्या समाधान हुने छैन । जसले हाम्रो समस्यालाई प्रत्यक्ष देख्न सक्दैन उसलाई हामीले प्रतिनिधि बनाउनुको कुनै अर्थ रहँदैन ।

देशमा उपयुक्त वातावरण नभएको निहुँ बनाउँदै हामी विदेश पलायन भैरहेका छौँ । विदेशमा बसेर पनि देशको लागि केही गर्न सक्यौँ भने हामीले पलायन भएको पीडा भोग्न पर्ने छैन । हामीले आफ्नो दायित्व विदेशमा बसेर पनि पूरा गर्न सक्ने प्रशस्त उपायहरू छन् । हुन त काम गर्नको लागि कुनै पदको आवश्यकता पर्दैन तर पदबाट नै सबै विषयहरू प्रभावित हुने हुँदा यो विकल्प प्रस्तुत गर्ने जमर्को गरेको छु । विदेशमा बस्ने नेपालीहरूको आधिकारिक तथ्यांक अहिलेसम्म छैन । सबै कानूनी रूपबाट मात्र बाहिर नजाने हुँदा पनि यस्तो तथ्याङ्क लिन त्यति सहज नहुन सक्छ । यदि विदेशमा बस्ने नेपालीहरूको प्रतिनिधित्व नेपालको व्यवस्थापिका संसदमा विदेशमा बस्नेहरूबाटै निश्चित संख्यामा तोक्न सक्यौँ भने देशको विकासमा केही




हदसम्म बल पुग्नेछ । समानुपातिक निर्वाचनबाट मात्र भए पनि त्यस प्रकारको प्रतिनिधित्व हुन आवश्यक छ । यो विभिन्न प्रकारले निश्चित पार्न सकिने छ । यदि सकियो र प्रत्यक्ष निर्वाचनबाट नै भयो भने धेरैभन्दा धेरैले आफ्नो नाम मतदाता नामावलीमा समावेश गर्ने हुँदा तथ्याङ्क निकाल्न सजिलो पर्ने तथा कम विवादित हुन्छ । यदि त्यो सम्भव भएन भने विभिन्न क्षेत्रमा स्थापित व्यक्तिहरूबाट विदेशबाट केही संख्यामा प्रतिनिधित्व गराउन सकिन्छ ।

यसरी छानिने व्यक्तिहरूलाई भौगोलिक रूपमा प्रतिनिधित्व गराउनु पर्दछ । यसरी छानिएका प्रतिनिधिहरू अलि समय भएका, आर्थिक रूपमा सबल, बौद्धिक रूपमा सक्षम, सामाजिक रूपमा स्थापित हुनुपर्नेछ । जसले आफू बसेको ठाउँमा आर्जन गरेको सीप शक्तिलाई आफू आएको ठाउँमा पुर्याउन सकोस् । सधैं हाम्रा नेताहरूले गरेनन् भन्दै आएका हामीलाई पनि के गर्न सक्दा रहेछौँ भन्ने प्रमाणित गर्ने अवसर पाउने छौँ । दोष थुपार्ने संस्कृतिलाई हटाउँदै दोष बोक्ने दायित्व वहन गर्न थाल्न सक्नेछौँ । हामी जो जहाँ बसेका छौँ त्यहाँ पनि आफ्नो अधिकारको प्रयोग गर्दै राजनीतिक संलग्नतामा केही चासो दिइसकेका छौँ । यसलाई पनि अझ प्रभावकारी रूपमा अगाडि बढाउँदै विदेशमा बसेर पनि देशको चौतर्फी विकासको लागि प्रत्यक्ष संलग्न रहने मार्ग प्रस्तुत गर्ने प्रयास गरौँ । देशले एउटा निश्चित अवस्था पार गरेपछि यस्तो प्रयास आवश्यक रहने छैन । हामी सम्पन्न देशका नागरिक हौँ भन्न पाएपछि यो अवस्थाको अन्त्य स्वत: हुनेछ ।

अहिले सरकारको तर्फबाट विभिन्न क्षेत्रमा योगदान पुर्याउने २६ जना सांसदहरूमध्ये कमसेकम एकजना लामो समयसम्म विदेशमा बसेर देशको लागि केही गर्छु भन्ने व्यक्तिलाई मनोनित गर्न आवश्यक छ । प्रत्येक पार्टीलाई भागबन्डा लगाईएको यो कोटा २५ मा सीमित राखी एक जना गैर आबासीयहरूको लागि भनेर व्यवस्था गर्न आवश्यक छ । हुन् त प्रत्येक पार्टीले आफ्नो समानुपातिक सदस्यहरूमध्ये केही विदेशमा बस्नेहरूलाई पनि प्रतिनिधित्व गराउन सक्नुपर्ने थियो । त्यो गरिएन । तीस लाख विदेशमा बस्ने नेपालीहरूको तर्फबाट एकजना प्रतिनिधि दिन पनि कन्जुश्याई गर्नु हुँदैन । हामी एनआरएनहरूले पनि यसबारे समयमा नै कुरा राख्न सकेनौँ ।

माथिका पंक्तिहरू मैले दोश्रो संबिधान सभाको निर्वाचन अगाडि यसरी लिपिबद्ध गरेको रहेछु । त्यतिबेला मलाई विश्वका अरू देशहरूमा मूलथलोभन्दा बाहिर बस्नेहरूले प्रतिनिधि चुन्न पाउने ब्यवस्था छ भन्ने थाहा थियन । कुनै अध्ययन अनुसन्धान पनि गरेको थिइनँ । मनमा लागेर लेखेको मात्रै थिएँ । तर गत वर्ष ब्रिटेन नेपाल लएर्स एशोशियशनले लन्डनमा आयोजना गरेको एउटा कार्यक्रमको तयारीको सिलसिलामा केही खोज गर्दा विभिन्न अनलाइनहरूमा पाइएका जानकारीहरू हाम्रा लागि पनि उत्तिकै सान्दर्भिक भएकाले राख्ने कोसिस गरेको छु ।

सर्वोच्च अदालतबाट केही समय अगाडि मात्रै संसारभरि छरिएका नेपालीहरूलाई नेपालको निर्बाचनमा प्रत्यक्ष्य सहभागी गराउन आवश्यक व्यवस्था मिलाउन सरकारको नाममा निर्देशनात्मक आदेश जारी गरेको छ। यसबाट विदेशको नागरिकता नलिएका नेपालीहरूले नेपालमा हुने मतदानमा आफु जुन देशमा बसेका छन् त्यही देशबाट मतदान गर्न

सक्ने व्यवस्था हुने देखिन्छ। तर भोट हाल्न पाउनु मात्रै मताधिकारको अधिकार प्रयोग गरेको मान्न सकिन्न ।आफ्नो अधिकार प्राप्ति र सुनिश्चिताको निम्ति संसदमा आफ्नो प्रतिनिधि पठाउने प्रक्रिया नै निर्वाचन हो । तसर्थ जसले आफ्नो समस्या र संभावनाको उचित प्रतिनिधित्व गर्न सक्छ उ मात्रै आफ्नो प्रतिनिधि हुन सक्छ ।

बेलायतको लन्डनमा बस्ने नेपालीको समस्या लम्जुङ्मा बस्ने वा कतारमा बस्ने नेपालीको समस्या कर्णालीमा बस्ने नेताले कसरी प्रतिनिधित्व गरेको मान्न सकिन्छ ? विदेशमा देखेका र सिकेका नयाँ सीप प्रबिधि तथा प्रणाली वा त्यहाँ भोग्न परेका समस्याहरूलाई सम्बन्धित व्यक्ति मार्फत नै प्रश्तुत गर्दा बढी प्रभावकारी बन्न जान्छ। नीति निर्माण गर्ने ठाउँमा विदेशमा बस्ने नेपालीहरूको केही प्रतिनिधि पात्रहरू हुन् सकेमा मात्र सही प्रतिधित्व भएको मान्न सकिन्छ।

उदाहरणको लागी हाल विभिन्न देशका सदनमा विदेशमा बस्नेहरूबाटै प्रतिनिधित्व हुने गरेको प्रतिनिधि संख्या, जम्मा सदस्य संख्या र प्रतिशत निम्न अनुसार रहेको देखिन्छ ।

| |
|---|
| १) अल्जेरिया ८/३८९ = २.१०% |
| २) अंगोला ३/२२० = १.४०% |
| ३) केप भर्डे ६/७२ = ८.३०% |
| ४) कोलोम्बिया १ /१६६ = ०.६०% |
| ५) क्रोयसिया ६/१५२ = ३.९०% |
| ६) इक्वेडर ६/१३० = ४.६० % |
| ७) फ्रान्स १२/३३१ = ३.६० % |
| ८) इटाली १२/६३० = १.९० % |
| ९ ) मोजाम्बिक २/२५० = ०.८० % |
| १०) पानामा ६/१३० = ४.६० % |
| ११) पोर्तुगल ४/२३० = १.७० % |

अहिले विस्वका ११५ देशका जनताहरू संसारको कुनै भागमा बसे पनि आफ्नो देसको निर्बाचनमा सहभागी हुने गरेको देखिन्छ । जसमा २८ अफ्रिकी, १६ अमेरिकन, २० एशियन, ४१ पश्चिमी, मध्ये र पूर्बी युरोप तथा १० प्यासेफिक मुलुकहरू पर्दछन् । अन्य केही देशहरूले पनि विदेशमा बस्नेहरूलाई मतदानमा भाग लिन पाउने नीति अङ्गीकार गरेका छन् तर आवश्यक कानुनहरू बन्न बाँकी देखिन्छ ।

प्रविधिको विकास र विस्तारका कारण अब त इन्टरनेटमार्फत पनि भोट हाल्ने ब्यबस्था भएको देखिन्छ । निम्न देशहरूमा इ भोटिङ्गको पनि सुबिधा भएको देखिन्छ । अस्ट्रेलिया, बेल्जियम, मलेशिया, ब्राजिल, क्यानाडा, इस्टोनिया, फ्रान्स, जर्मनी, इंडिया, इटाली, नामिबिया, हल्याण्ड, नर्वे, पेरू, स्विटजरल्याण्ड, यु के, भेनेजुएला, फिलिपिन्स । यसरी हेर्दा इच्छाशक्ति हुने हो भने नेपालले पनि यो सुबिधा प्रयोग गर्न सक्ने छ ।

यही प्रसंगमा अहिले नयाँ संबिधान अनुसार हामीले राजनीतिक अधिकार पाएका छैनौँ । त्यसैले हामी नेपाली नागरिक हैनौँ भन्ने जिकिर उचित नभएको केही आधारहरू प्रस्तुत गर्न पनि उचित ठान्दछु ।

नेपालको संविधानको धारा १४ अनुसार 'विदेशी मुलुकको नागरिकता प्राप्त गरेको दक्षिण एसियाली सहयोग संगठनका सदस्य राष्ट्र बाहेकका देशमा बसोवास गरेको साविकमा वंशजको जन्मको आधारमा निज वा निजको बाबु वा आमा, बाजे वा बजै, नेपालको नागरिक रही पछि विदेशी मुलुकको नागरिकता प्राप्त गरेको व्यक्तिलाई संघीय कानुन बमोजिम आर्थिक, सामाजिक र सांस्कृतिक अधिकार उपयोग गर्न पाउने गरी नेपालले गैरआवासीय नागरिकता प्रदान गर्न सकिनेछ' भन्ने व्यवस्था गरेर नेपालले दोहोरो नागरिकताको सिद्धान्तलाई स्वीकार गरेको छ ।

चलन चल्तीमा भन्दा विदेशमा रहेर विदेशी नागरिकता प्राप्त गरेकाहरूले राजनीतिक बाहेक अरु अधिकारहरु प्रयोग गर्न पाउने गरी गैरआवासीय नेपाली नागरिकता प्राप्त गर्न सक्नेछन्। सिद्धान्ततः राजनीतिक अधिकार विनाको नागरिकको कल्पना गरिएको हुँदैन तर सबै नागरिकले सबै अधिकार प्रयोग गर्न सक्छ भन्ने पनि छैन । नागरिकको उमेर, स्वास्थ्य, शिक्षा तथा बसोवासको आधारमा फरक अधिकार प्रयोग गर्न सक्ने हुन्छ । सम्पूर्ण अधिकार सहितको नागरिकले पनि फरक फरक योग्यता पूरा गर्न पर्ने हुन्छ। भोट हाल्ने अधिकार दियो भने निर्बाचनमा उमेद्वार पनि बन्न दिन पर्छ त्यसैले यो अधिकार दिन हुँदैन भनेको सुनिन्छ । तर भोट हाल्न पाउने सबैले सबै पदमा उमेद्वार पनि बन्न पाउँदैन । जस्तो सांसद बन्न २५ वर्ष उमेर पुगेको हुनु पर्ने तर सबै सांसद प्रधान मन्त्री वा रास्ट्रपतिको उमेद्वार हुन पाउदैन । उदाहरणको लागि ४५ वर्ष नपुगेको व्यक्ति राष्ट्रपतिको उम्मेदवार बन्न सक्दैन । मगज बिग्रेको वा कुनै अपराधमा सजाय पाएको व्यक्ति कुनै पनि जिम्मेवारीको लागि अयोग्य ठहरिन्छ। सम्बन्धित विषयमा न्यूनतम यति अध्ययन गरेको हुनुपर्छ भनेर किटानी समेत कतिपय पदहरूमा गरिएको हुन्छ ।

बेलायतकै उदाहरण लिँदा पनि १५ वर्षभन्दा बढी समय देशबाहिर बसेकाले जनमत संग्रहमा भाग लिन पाउँदैन र २ वर्षभन्दा बढी देशमा बसेन भने विविध

> चलन चल्तीमा भन्दा विदेशमा रहेर विदेशी नागरिकता प्राप्त गरेकाहरुले राजनीतिक बाहेक अरु अधिकारहरु प्रयोग गर्न पाउने गरी गैरआवासीय नेपाली नागरिकता प्राप्त गर्न सक्नेछन्। सिद्धान्ततः राजनीतिक अधिकार विनाको नागरिकको कल्पना गरिएको हुँदैन तर सबै नागरिकले सबै अधिकार प्रयोग गर्न सक्छ भन्ने पनि छैन।

सुविधाहरु कटौती हुनेगर्छ। राजनीतिक अधिकार प्रयोग गर्न नपाउने गरी प्रदान गरिने नागरिक यो देशको नागरिक होइन भन्न मिल्दैन । तसर्थ नेपालको संविधान २०७२ ले सैद्धान्तिक रुपमा दोहोरो नागरिकतालाई स्वीकार गरी सकेको अवस्था हो ।

कुनै पनि देशका सबै नागरिकहरूले सबै प्रकारको अधिकार पाउँदैन । विविध आधारमा अधिकारहरू पाउने गर्दछन् । उमेर, शिक्षा,स्वास्थ्य, भौगोलिक अवस्था, जातीय आधार, बसोबासका आधारमा अधिकारहरू पनि फरक फरक हुन्छ । नागरिकको वर्गिकरण मतदान गर्ने आधारमा मात्रै गर्ने हो भने प्राय देशमा नागरिकभन्दा बढी अनागरिकहरू बसोबास गरेको देखिन्छ । निर्बाचनमा भाग लिनको लागि संसारका प्राय देशहरूमा १८ वर्षको उमेर किटानी गरेको देखिन्छ । अस्ट्रिया, क्युबा लगायत अति न्यून देशमा १६ वर्षलाई बालिग मानिन्छ । ग्रीस, इन्डोनेशिया, उत्तर कोरियामा १७ वर्षका युवाहरूले पनि भोट हाल्न पाउदछन्। सिंगापुर, मलेशिया, ओमानमा भने २१ वर्ष पुगेपछि मात्रै भोट हाल्न पाउदछन् ।

यसरी भोट हाल्न पाउनेहरुमध्ये सबैले भोटर लिस्टमा आफ्नो नाम लेखाएका पनि हुदैनन् । बेलायत जस्तो अनिवार्य भोटर लिस्टमा नाम लेखाउन पर्ने देशमा समेत ६९.३१ प्रतिशतले मात्रै नाम लेखाएको देखिन्छ । ग्रीसमा ५६.१६% र अमेरिकामा यो दर ६४.२३% देखिन्छ ।

बेल्जियमको प्रादेशिक र स्थानीय चुनावमा त कानुनी रूपमा ५ वर्ष बसोबास गरेका १८ वर्ष उमेर पुगेका कुनै पनि देशका नागरिकले एउटा निबेदन दिएर भोटर लिस्टमा नाम लेख्न पाउछ । चुनावको बेलामा आफू उपस्थित हुन नसके अरू कसैलाई आफ्नो मत खसाल्ने अधिकार समेत दिन पाउदछ ।

संसारका केही देशहरूमा अनिवार्य भोट हाल्न पर्ने कानुन भएकोले भोट नहाल्नेलाई सजायको व्यवस्था पनि छ । अर्जेन्टिना, बेल्जियम, ब्राजिल, लक्जम्बर्ग, पेरू, उरूग्वे लगायत केही देशहरूमा भोट नहाल्नेलाई सजायको व्यवस्था गरिएको छ । यी देशहरूमा कतै ७५ वर्ष तै ७० वर्ष कतै ६५ वर्ष उमेर नाघेकालाई, कतै नपढेका, जागिर नखानेहरुलाई भोट नहाले पनि जरिबाना हुँदैन । लेबनानमा भने महिलाहरूले भोट हाल्न अनिबार्य हुदैन । टर्की, ग्रिस, बुल्गेरिया,थाईल्याण्ड,इजिप्ट केही देशहरुमा अनिबार्य मतदान गर्न पर्छ भनिए पनि जरिबाना भने हुदैन ।

भोटर लिष्टमा नाम भएकाहरू पनि सबैले भोट हाल्दैनन् । चुनावको बेलामा आफ्नो नाम भएको ठाउमा नहुनु ,देश बाहिर हुनु तथा अन्य कारणहरुले गर्दा भोट हाल्ने हरूको संख्यामा कमी हुने गर्दछ ।अहिलेको विस्व तथ्यांक अनुसार पनि चुनावमा भोट हाल्नेहरूको संख्यामा उल्लेख्य कमी आएको देखिन्छ ।

विकसित देशहरूको तुलनामा विकासोन्मुख तथा अविकसित देशहरूमा निर्वाचनमा बढी मत खसेको देखिन्छ । विकसित देशहरूमा अहिलेभन्दा ५० वर्ष अगाडी बढी मत खस्ने गर्दथ्यो । जस्तै सन् १९५० मा बेलायतमा ८३.६१% मत खसेको थियो भने गत वर्ष ६८.९३% मात्रै मत खसेको थियो । त्यस्तै अमेरिकामा १९६८ मा ८९.६६% मत खसेको थियो त्यो संख्या २०१६ मा आइपुग्दा ६५.४४ भयो र २०१४ मा त ४२.५०% मात्रै थियो । उता इथियोपियामा भने २०१५ मा ९३.२२५, १९९५ मा ९४.०५% मत खसेको पाइन्छ। सबैभन्दा कम २००५ मा ८२.६०% मत खसेको थियो । हाम्रै नेपाल मा १९९१ र १९९७ मा ८८.१३% मत खसेको देखिन्छ । गत निर्बाचनमा ६८.६७% मत खसेको थियो ।

२०१६को तथ्यांक अनुसार नेपालको कुल मतदाता संख्या १ करोड ४० लाख ५४ हजार ४८२ रहेको छ । सन् २००८ देखि १५ सम्म वैदेशिक श्रम अनुमति लिनेहरूको संख्या २७ लाख २३ हजार ५८७ देखिन्छ। यस बाहेक अन्य माध्यमबाट बाहिर जानेहरू, सरकारी नियोग र दुतावासका कर्मचारीहरू तथा भारतमा बस्नेहरूको संख्या उलेख्य संख्यामा देखिन्छ । हामीले भन्दै आएको हामी बिदेशमा बस्नेहरूको संख्या ४० लाख मान्ने हो भने झन्डै २८ प्रतिशत मतदाताहरूले निर्बाचनमा भाग लिन पाएका छैनन् ।तसर्थ चुनाब मात्रै सबै थोक मानेर यसैलाई नागरिकताको मापन बनाइनु हुँदैन ।

देश बकसित र समृद्ध भएपछि त्यस देशको जनताले चुनावलाई कम महत्व दिएको देखिन्छ। राजनीति आफ्नो तरिकाले अगाडि बढिरहेको हुन्छ भने त्यहाँका जनताहरू पनि आफ्नै तरिकाले सबैले आ आफ्नो काम गर्दै कर्तब्य पालना गरिरहेका हुन्छन् । भोट हाल्ने अधिकार पाएर भोट नहाल्ने र भोट नै हाल्न नपाउने नागरिक बीच कुनै भिन्नता हुनु उचित हैन ।

विदेशको नागरिकता लिने बित्तिकै नेपालको नागरिकता खारेज हुने र फेरि गैरआवासीय नेपाली नागरिकता लिन पाइने झन्झटिलो प्रकिया अवलम्बन गर्नु आवश्यक छैन । हामीले नयाँ नागरिकता बाँड्ने भनेका छैनौं। जोसँग छ उसको निरन्तरता दिने र उसको सन्ततिले पनि पाओस् भन्ने मात्रै हो । त्यसो गर्दा अन्य देशको मानिसले नेपाली नागरिकता पाउँछ भनेर डराउन पर्दैन । बरू संसारभर आफ्ना क्षमताले स्थापित हुने हाम्रो सन्ततिको ख्यातिको स्वामीत्व नेपालले पनि महसुस गर्न पाउनेछ। नागरिकको हैसियतले हाम्रो सन्ततिहरूको नेपालसँगको सम्बन्ध

भूगोलको भन्दा रगतको नाता गाढा हुन्छ। कानुनी प्रक्रिया पूरा गरेर कागजी नागरिकता लिनेहरु राष्ट्रप्रेमी बन्न सक्दैन भन्ने पुरानो मान्यता गलत छ। संसार निकै सानो भइसकेको छ एउटा कुनाबाट अर्को कुना पुग्न धेरै समय लाग्दैन।

गाढा हुँदै जाँदा दायित्वबोध पनि गर्नेछन्। भविष्यमा आफ्नो पुर्खाको देशमा जान्छु र सेवा गर्छु भन्दा तिमी नेपाली हैनौ भन्ने वातावरण सिर्जना नहोस् भनेर हामी सजग हुनु स्वाभाविक मान्नुपर्छ। त्यतिवेला हाम्रा सन्ततिहरूले हामीलाई परदेशी बनायो भनेर हामीले गाली खान नपरोस् भन्ने हाम्रो चिन्ता हो ।

भूगोलको भन्दा रगतको नाता गाढा हुन्छ । कानुनी प्रक्रिया पूरा गरेर कागजी नागरिकता लिनेहरु राष्ट्रप्रेमी बन्न सक्दैन भन्ने पुरानो मान्यता गलत छ। संसार निकै सानो भइसकेको छ एउटा कुनाबाट अर्को कुना पुग्न धेरै समय लाग्दैन । प्राय विकसित देशहरूले दोहोरो नागरिकतालाई अंगिकार गर्दा के त्यस्ता देशको राष्ट्रियतामा आँच आएको छ र ? राष्ट्रको माया नभएर जो कोहीलाई पनि नागरिकता दिएका हुन र ? हाम्रोजस्तो विकासोन्मुख देशले त झन् संसारभर छरिएका आफ्ना नागरिकहरूलाई आफ्नै नागरिक बनिरहन उपयुक्त वातावरण तयार गर्नुपर्छ ।

भोलि विदेशमा बस्ने नेपालीहरूले निर्वाचनमा सहभागी हुन् पाउने ब्यबस्ठा लागु हुदा आफ्ना वरिपरिका केही मानिसहरू, जो आफू र आफ्नोको लागि मात्रै सारा जीवन भोगिरहेका छन्, उसले गौरवका साथ म नेपाली भनेर जेठी औठामा मत खसालेको प्रमाण देखाइ रहँदा विदेशमै बसेर पनि आफू र आफ्नो भन्दा समाज र देशकै लागि सारा जीवन बिताएका र बिताउन तयार रहेकाहरूका आँखाले बलिन्द्र धारा आँशु झार्न पर्ने अवस्था सृजना नहोस भन्ने कुरामा हामी सबै सतर्क हुन आवश्यक छ ।

त्यसैले नागरिकतालाई राजनीतिसंग मात्रै जोड्ने, राजनीति भनेको निर्वाचन मात्रै हो भन्ने र नागरिकताको कुरा निकाल्ने बित्तिकै दुई ठूला देशका नागरिकहरूले नेपाल भरिने तर्कले जो जहाँ बसे पनि (भौगोलिक विविधतामा) नेपालको माया गर्ने तिनै नेपालीहरू समष्टिमा राष्ट्र हो भन्ने संबिधानको धारा ३ ले ब्याख्या गरेको निम्न बुँदालाई अबलम्बन गरेको देखिदैन । ●

*(राष्ट्र, बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक विशेषतायुक्त, भौगोलिक विविधतामा रहेका समान आकांक्षा र नेपालको राष्ट्रिय स्वतन्त्रता, भौगोलिक अखण्डता, राष्ट्रिय हित तथा समृद्धिप्रति आस्थावान रही एकताको सूत्रमा आबद्ध सबै नेपाली जनता समष्टिमा राष्ट्र हो ।)*

# एनआरएनएको जननी बेलायत



**नवीन पोखरेल**

गैर आवासीय नेपाली संघ (एनआरएनए) को सञ्जाल अहिले विश्वभर फैलने क्रममा छ । ११ अक्टोबर, २००३ मा पहिलो सम्मेलनसंगै जन्मिएर बामे सरेको एनआरएनए अहिले विश्वका ८० देशमा पुगेको छ । सबैभन्दा कान्छो राष्ट्रिय समन्वय परिषद (एनसीसी) माल्टा बनेको छ । एकीन तथ्यांक त प्राप्त भएको छैन्, तर एनआरएनएले सार्क मुलुकबाहेक विदेश बस्ने करिब ५० लाख नेपालीको प्रतिनिधित्व गरिरहेको भनिन्छ । विदेश बस्ने नेपालीले यसलाई आस्थाको केन्द्र ठान्ने गर्छन् भने नेपाल सरकारले पनि 'रिकग्नाइज' गरि विशेष महत्व दिंदै आएको छ ।

एनआरएनएको प्रसंग उठान गरिरहंदा यसको परिकल्पना, उद्देश्य र प्रारम्भिक दिनहरूतिर पनि फर्केर हेर्नुपर्ने हुन्छ । विदेश बस्ने नेपालीहरूको संख्या क्रमशः बढिरहंदा ती गैर आवासीय नेपालीलाई एउटै छातामुनी समेट्न, विदेशमा सिकेको सीप, ज्ञान, पूंजी स्वदेश भित्र्याउन अनि नेपाली कला, संस्कृति एवं भाषा संरक्षण तथा प्रवर्धन गर्न अत्यावश्यक हुने महशुस गर्न थालियो । त्यसमध्ये झन् बढी आवश्यकता ठान्ने अभियन्ताहरू थिए डा. उपेन्द्र महतो, जीवा लामिछाने, रामप्रताप थापा, डा. राघवप्रसाद धिताल (ओबिइ), प्रा. डा. सूर्यप्रसाद सुवेदी (ओबिइ, क्यूसी), रबीन्द्र मिश्र, महन्त श्रेष्ठ, चिरन्जिवी ढकाल आदि । विभिन्न मुलुकमा बस्ने नेपालीहरू एकजुट हुन र सञ्जालमार्फत अझ दरिलो पहिचान बनाउन इच्छुक भइरहंदा यसलाई मुर्तरूप दिन अभियन्ताहरूको पहिलो औपचारिक बैठक बेलायतमै बसेको थियो । त्यो थियो सन् २००३ ताका । बेलायतमा गहन छलफलपछि नेपालमा गैर आवासीय नेपाली संघ दर्ता गरी सन् ११ अक्टोबर, २००३ मा यसको जन्म भएको थियो ।

त्यसकारण एनआरएन युकेले संघको जननी ब्रिटेनमा भएको 'क्रेडिट' लिइरहन्छ । यही बेला अर्को ऐतिहासिक कीर्तिमान पनि एनआरएन युकेले नै कायम गरेको छ । त्यो के भने सन् २०१९–२१ कार्यकालका लागि करिब १४ हजार पन्जिकृत

पहिलो तस्बिर ३० अगस्ट २००३ मा पश्चिम लन्डनको एक्टनमा भएको पहिलो ऐतिहासिक बैठक




Photo saujanya: Chiranjibi Dhakal/UK

सदस्यहरू बनाएर राष्ट्रिय समन्वय परिषद, बेलायत विश्वकै सबैभन्दा बढी सदस्यहरू बनाउने परिषदमा दरिएको छ । नेपालीहरू अत्यधिक रहेका अमेरिका, अष्ट्रेलियालाई पनि यसले उछिनेको हो । यो सदस्य संख्या वृद्धिले संघप्रति गैर आवासीय नेपालीको आकर्षण बढेको रूपमा पनि धेरैले बुझेका छन् । त्यसो त मातृभूमि प्राकृतिक विपत्तिको चपेटामा परेका बेला होस् वा केन्द्रबाट सहयोग आव्हान, एनआरएनए युकेले आफूलाई अब्बल शाखाका रूपमा उभ्याइसकेको छ ।

एनआरएनए गठनलाई नजिकबाट नियाल्ने साक्षी हुन् व्यवसायी महन्त श्रेष्ठ । उनी एनआरएनए युके संस्थापक अध्यक्ष पनि हुन् । 'हामीले सञ्जाल गठनका लागि सन् २००२ देखि नै छलफल गरिरहेका थियौं । उपेन्द्र महतो, जीवाजी, रामप्रताप थापाहरू लन्डन आइराख्थे । विदेश बसेका सबै नेपालीलाई समेट्ने अनि टाढा बसेपनि हामी सबै नेपाली हौं र मातृभूमिका लागि केही गर्नुपर्छ भन्ने सोच अभिवृद्धिको उपज थियो संघ गठन', श्रेष्ठ स्मरण गर्छन् ।

श्रेष्ठ सहमतिमा सन् २००५, ६ मार्चमा एनआरएनए युके संस्थापक अध्यक्ष बने । उनलाई संस्थापक अध्यक्ष बन्न पाएकामा गर्व छ । जातजाति, धर्म र वर्ग भन्दा माथि उठेर संघ गठन भएको थियो । अहिले जस्तो राजनीतिक हावी र भांडभैलो पनि थिएन । 'दोहोरो नागरिकता, कुटनीति र लगानी मेरा मुख्य एजेन्डा थिए । मेरो पालामा मातृभूमि र भइपरी आउने बेला केही सहयोग गर्न सकिन्छ भनेर 'सिड मनी' करिब १८ हजार पाउण्ड संकलन गरेका थियौं । अरूसंग नमागी आफैंले त्यो पैसा जुटाइएको थियो किनकि च्यारिटी माग्न अहिलेको जस्तो संस्था थिएनन् । आसन ग्रहण र भाषण पनि थिएन', श्रेष्ठले भने, 'मेरो एक वर्ष कार्यकाल भएपनि पहिलो कार्यसमितिले सहयोग र नेपाली संघसंस्थालाई एकै ठाउंमा ल्याउने काम गर्‍यो ।'

श्रेष्ठले एक वर्षभित्र चुनाव गर्ने प्रतिवद्धता बमोजिम उपाध्यक्ष अशोक श्रेष्ठलाई पद हस्तान्तरण गरेको स्मरण गरे । 'अहिले विभाजन, राजनीतिक हस्तक्षेप, भांडभैलो, मानिसहरूमा पैसाको दम्भ देखेर दुःख लाग्छ', उनले गुनासो पोखे, 'त्यही भएर अचेल म एकदम निष्क्रिय छु', कुनै फोरममा जान्न । संस्थाले आफ्नो गरिमा बचाउने बेला आएको छ ।'

त्यसो त पाका व्यवसायी एवं समाजसेवी श्रेष्ठले भनेजस्तै व्यक्ति विशेष वा समूहको पकडमा संघ रुमल्लिएको आभास अन्य धेरै अग्रजहरूलाई पनि भएको छ । निस्वार्थ भावनाले समाजसेवा गर्न खोज्नेहरू यसमा अटाउन सकेका छैनन् किनकि उनीहरूसंग पर्याप्त धन छैन् । सदस्यता शुल्क तिरिदिएर नेतृत्व लिन सक्ने सामर्थ्य बौद्धिक वा सच्चा समाजसेवीको नियन्त्रण बाहिर छ । केही वर्ष यता चुनावको उत्तरार्धमा भारी रकम खन्याएर नेतृत्व लिने परिपाटी विकसित भएको छ ।


Photo saujanya: Chiranjibi Dhakal/UK

↑ दोस्रो तस्बिर संस्थापक नव निर्वाचित टिम

एनआरएनए नाम आउने बित्तिकै प्रा.डा. सूर्यप्रसाद सुवेदी (ओबिइ, क्यूसी) को योगदान कसैले भुल्न सक्दैन् । संघको मुख्य विधान र यसको 'कन्सेप्ट पेपर' लेख्ने अभिभारा डा. सुवेदीले नै लिएका थिए । तर, अचेल संघमा आवद्ध छैनन् उनी । आफू जस्ता प्रवुद्ध वर्ग अट्ने वातावरण संघमा नभएको गुनासो प्राध्यापक सुवेदीले बेला बेला व्यक्त गर्दै आएका छन् । यद्यपि, उनले संस्थालाई नजिकबाट नियालिरहेको बताए । उनको पर्यवेक्षणमा अहिले एनआरएनए नेताहरूसंग दुरदर्शीताको कमी छ, प्रतिवद्धता र गाम्भीर्यताको अभाव छ । उनीहरू समाज र देशप्रतिभन्दा व्यक्तिगत स्वार्थपूर्तिका लागि तंछाडमंछाड गरिरहेका छन् । 'अहिले संगठन मुद्दा हारेको झगडिया जस्तो दिशाहीन अवस्थामा छ', उनको असन्तुष्टि छ, 'नेपाली नागरिकता निरन्तरता मुद्दामा संघले बौद्धिक नेतृत्व दिन नसक्दा कयौं अवसर गुमेको छ । संघका अन्य क्रियाकलाप पनि निरासाजनक खालका छन् ।'

संस्थापकको नाताले अझै पनि सक्षम नेतृत्वले नेपाल र विदेश बस्ने नेपालीको इज्जत प्रतिष्ठा कायम राखी मातृभूमिका लागि केही गर्न सक्ने अपेक्षा उनले राखेका छन् । एनआरएनएप्रति पहिलो पुस्ताको आकर्षण देखिएपनि दोश्रो पुस्ता भने यसतिर आकर्षित हुन सकिरहेको देखिन्न । पहिलो पुस्तालाई खादा, आसन र भाषण प्यारो छ तर दोश्रो पुस्ता यी तीनै चिजमा आफ्नो भविष्य र करिअर देख्दैन् । त्यसकारण उनीहरूलाई तान्न युवामुखी रचनात्मक कार्यक्रम ल्याउन आवश्यक छ । एनआरएन पहिलो पुस्ता पनि 'कुइरोको काग' झैं अलमलिएको अवस्था छ । लगानी गरौं साथमा पूंजी छैन्, नगरौं संस्थाको उद्देश्यसंग मेल खांदैन् ।

शुरू शुरूका दिनजस्तो पैसाको खोलो बगाइदिन्छौं भनेर दिएको गफ स्वदेश बस्ने नेपालीले अब पत्याउन छाडिसकेको अवस्था छ । वैदेशिक लगानी, कल्याणकारी काम र सीप हस्तान्तरणमा खुट्टा कमाउने हो भने एनआरएनए कालान्तरमा अस्तित्वविहीन हुने निश्चित छ । ●

*(लेखक नेपाल पत्रकार महासंघ युकेका संस्थापक अध्यक्ष हुन् ।)*

एनआरएनएप्रति पहिलो पुस्ताको आकर्षण देखिएपनि दोश्रो पुस्ता भने यसतिर आकर्षित हुन सकिरहेको देखिन्न । पहिलो पुस्तालाई खादा, आसन र भाषण प्यारो छ तर दोश्रो पुस्ता यी तीनै चिजमा आफ्नो भविष्य र करिअर देख्दैन् । त्यसकारण उनीहरुलाई तान्न युवामुखी रचनात्मक कार्यक्रम ल्याउन आवश्यक छ ।

# एनआरएन : सबैको बन्ने कि सीमितको



नरेश खपाङ्गीमगर

नेपालीहरू विदेश जानेक्रम त्यति पुरानो छैन । केही अपवादलाई छोडेर हेर्ने हो भने करिब २०० वर्षअघि गोरखा सैन्यमा भर्ती भएका गोरखाहरूलाई नै पहिलो छिमलका गैरआवासीय नेपाली भन्नुपर्छ । हुन त कसैकसैले अरनिको र सीतालाई पनि गैरआवासीय नेपाली भन्ने गरेका छन् । सीताको कथा हेर्ने हो भने भारतमा विवाह भएको र पछि अपहरण भएर श्रीलंकासम्म पुगेको बताइन्छ । एक त सीताको कथा मिथकीय छ भने उनलाई लगिएको दुवै मुलुक अहिलेको सार्कभित्र पर्छ जो एनआरएनको क्षेत्रभित्र पर्दैन । अरनिको अथवा बलबाहु चीन गए । वर्तमानमा चीन सार्क क्षेत्रभित्र नपरे पनि विगतमा भोटसित नेपालको व्यापार अहिले चीनसँग भन्दा प्रशस्तै हुने गर्दथ्यो । अल्पकालका लागि धेरै नेपालीहरू व्यापारिक सिलसिलामा धेरै नेपालीहरू ल्हासा जाने गर्दथे । तर आधुनिक कालमा गैरआवासीय नेपालीको आमपुस्ता भन्ने बहुदलीय व्यवस्थाको स्थापनापछि नै भएको मान्नुपर्ने हुन्छ ।

वि.सं. २०४६ सम्म आइपुग्दा विश्व निक्कै उदार भइसकेको थियो । रङ, भाषा, धर्म नमिले पनि मानिस-मानिस एउटै हो भन्ने मानवीय भावनाको विकास र प्रचार निक्कै भइसकेको थियो । पश्चिमा देशहरूले विकासको वायुपंखी घोडा चढेर निक्कै तरक्की गरिसकेका थिए । त्यहाँ औद्योगीकरण र चेतनास्तर वयस्क हुँदा काम गर्ने जनशक्तिको अभाव हुन थालिसकेको थियो । यस्तै, सन्तान जन्माउनमा अनिच्छा वा बेफुर्सदीले जन्मदर कम हुँदै थियो । यस्तो पृष्ठभूमिमा पश्चिमा मुलुकहरूले विश्वभरबाट तीक्ष्ण, कुशाग्र बुद्धि भएका जनशक्तिलाई रातो कार्पेट ओच्छ्याएर स्वागत गर्न शुरू गरेका थिए । अर्कोतर्फ, नेपालभित्रै पनि राहदानी लिन सजिलो भइसकेको थियो । पहिलेजस्तो मन्त्रीको सिफारिस अनिवार्य हुनुपर्ने व्यवस्था हटिसकेको थियो भने संचारका साधनहरूमा सहज पहुँचले विश्व वातावरणका बारेमा गाउँघरमा जानकारी पुगिसकेको थियो । जनसंख्या बढ्दै जाँदा पुरातन कृषि पेशाबाट वर्षभरि खान नपुग्ने अवस्था आइसकेको थियो । जसका कारण मानिसहरू विकल्पको खोजीमा देशबाहिरनिस्कन बाध्य भएका थिए ।

यस्तो आन्तरिक र बाह्य कारणले परदेशिका नेपालीहरूले विदेशमा रहँदाबस्दा दाम कमाए । नाम कमाए । पढाइमा राम्रो गरे । ब्यापारमा अब्बल निस्के । विदेशको त्यो भवसागरमा उनीहरूले जति प्रगति गरे पनि उनीहरूको परिचय कता हराउँथ्यो कता । उनीहरूलाई त्यतिबेला बोध भयो कि विदेशमा हामीले जति गरे पनि कसले चिन्छ ? अर्कोतर्फ आफूले सिकेको, जानेको, कमाएको कुरा आफ्नो मातृभूमिभित्र केही आदानप्रदान गरे कसैलाई फाइदा पो हुन्छ कि ? अनि यस्तो खोजी गर्दा विश्वका धेरै देशहरूमा नेपालीहरू पुगेका र स्थापित भइसकेका भेटिए । उनीहरूको सुखदु:खको मञ्च बनाउन कोसिस गर्दासम्ममा डायस्पोराको अवधारणा आइसकेको थियो । छिमेकी भारतीयहरूले गैरआवासीय भारतीय अभियान शुरू गरिसकेका थिए । त्यसैबाट पनि धेरथोर प्रभावित भएर नेपालीहरूले पनि सन् २००३मा गैरआवासीय नेपाली संघ (एनआरएन) शुरू गरे ।

यसरी स्थापित एनआरएनको उद्देश्यलाई मुख्यगरी दुई भागमा विभाजन गर्न सकिन्छ । पहिलो, सार्क मुलुकबाहिर बसोबास गरिरहेका (कर्मचारी र विद्यार्थीबाहेक) का नेपाली मूलका नेपालीहरूलाई संगठित गर्ने, उनीहरूको हित, अधिकारका बारेमा कार्य गर्ने । दोस्रो, उनीहरूको लगानीलाई नेपाल सरकार र नेपालका निजी क्षेत्रसित साझेदारी गरी देशभित्र भित्र्याउने ।

यसरी केलाउँदा एनआरएनको उद्देश्य एकातर्फ कल्याणकारी काम गर्ने छ अर्कोतर्फ व्यापार र लगानीको क्षेत्रमा काम गर्ने देखिन्छ । एनआरएनमा काम गरेका राष्ट्रिय र अन्तर्राष्ट्रिय समितिको नेतृत्व र क्रियाकलाप केलाएर हेर्ने हो भने एनआरएनले पहिलो उद्देश्यलाई कम महत्व दिएको र दोस्रो उद्देश्यलाई धेरै बढाइचढाइ गरेको देखिन्छ । शायद त्यो बिकाउ नाराका कारण हो या नेतृत्वकर्ताको पृष्ठभूमिका कारणले हो लगानी र व्यापारको छायाँमा गैरआवासीय नेपालीका अन्य सवालहरू परेका छन् । त्यसै कारणले होला अहिले बहुसंख्यक गैरआवासीय नेपालीहरू यो संस्थाबाट बाहिरै रहेका पाइन्छन् ।

यसको उदाहरण युके नै प्रष्ट छ । करिब डेढलाख नेपालीको बसोबास रहेको विश्वास गरिने युकेमा एनआरएनको सदस्यता लिने नेपालीहरूको संख्या गत वर्षको निर्वाचनमा ३ हजार ६०० मात्र थियो । त्यो भनेको करिब कुल नेपाली जनसंख्याको ५ प्रतिशतभन्दा कम्ती हो । अर्को अर्थमा भन्दा ९५ प्रतिशत युकेका नेपाली मूलका नेपाली एनआरएनभन्दा बाहिरै रहनु हो । आखिर यस्तो किन त ? एनआरएनए युके त उदाहरण मात्र हो । अष्ट्रेलिया र अमेरिकाको हालै सम्पन्न निर्वाचन पनि हेरियो । त्यहाँको पनि अवस्था त्यस्तै नै छ । अथवा बढीमा १० प्रतिशत नेपालीले एनआरएनको सदस्यता लिएका छन् ।

यस पंक्तिकारको विश्लेषणमा एनआरएनको उद्देश्य र स्थानीय तथा अन्तर्राष्ट्रिय नेतृत्वकर्ताहरूको अभ्यासका कारण एनआरएन बहुसंख्यक नेपालीलाई नेतृत्व गर्न चुकिरहेको छ । स्थापनाकालदेखि हालसम्मको अन्तर्राष्ट्रिय र राष्ट्रिय नेतृत्वलाई हेर्दा प्रायजसो व्यापारीहरूको हात परेको देखिन्छ । व्यापारीहरूले जोड दिने भनेको नेपालमा एकल लगानी, सामूहिक लगानीमा नै हो यो कुरा अहिले एनआरएनको पर्याय जस्तै बनिसकेको छ । तर लगानी त एनआरएनको विधानको ६ वटा उद्देश्यमध्ये दुईवटा उद्देश्य मात्र हुन् । बाँकी चार उद्देश्य त गैरआवासीय नेपालीको हित र अधिकारका बारेमा छ । उनीहरूको सुखदु:खका बारेमा छ ।

प्रवासी नेपालीको हाँसो-रोदनको साथी एनआरएन हो भन्ने प्रभाव एनआरएनले छोड्न सकेको छैन । यसैका कारण बहुसंख्यक प्रवासी नेपालीमा 'म किन एनआरएनको सदस्य बन्ने'भन्ने प्रश्न उठ्न सक्छ । किनभने नेपालमा लगानी गर्नसक्ने औकात भएका नेपालीहरू त केवल सानो संख्यामा मात्र छन् । यसकारण धेरै नेपालीहरूमा एनआरएनमा संगठित हुन कुनै आकर्षण नै रहेन । यसरी एनआरएन सीमित मानिसहरूको हातमा गएको छ । लगानी गर्नसक्ने हैसियत भएका मानिसहरू केवल १ प्रतिशत होलान् बहुसंख्यक नेपाली त रोजीरोटीकै लागि हो बाँच्ने । उनीहरूलाई एनआरएनको के चिन्ता, के चासो लगानीको ?

भन्न खोजिएको के हो भने जसरी एनआरएनको अवधारणा वा अभियान आयो अनि यसले जसरी नेपाल सरकारबाट मान्यता पायो त्यसपछि संस्थालाई अघि बढाउँदा एउटा पाटोबाट मात्र अघि बढाइयो । भन्नुको अर्थ यो होइन कि नेपालमा लगानी चाहे त्यो सामूहिक होस् या व्यक्तिगत अथवा प्रत्यक्ष वैदेशिक लगानी नै किन नहोस् । लगानी जुन विधिबाट गएपनि फाइदा पाउने नेपाल र नेपालीले नै हो । यसले सीमित नै सही यस्ता कार्यबाट केही नेपालीलाई लाभ पनि हुन्छ । तर सँगसैगै संस्थाका अन्य उद्देश्यहरूलाई पनि उत्तिकै जोड दिनुपर्छ र एनआरएन भनेको प्रवासी नेपालीको भरपर्दो, विश्वासयोग्य साथी हो भन्ने छाप पनि हरेक प्रवासी नेपालीमा बनाउनुपर्छ । यदि त्यसो भयो भने एनआरएनको सदस्य बनेको व्यक्ति अरू कुनै संस्थाको सदस्य बनिरहनै पर्दैन । भोलि अभर पर्दा एनआरएनले हेर्छ भन्ने प्रत्याभूति भएपछि बल्ल हरेक प्रवासी नेपाली यो संस्थाको सदस्य बन्नेछन् ।

अहिले त एनआरएन केवल व्यापारीहरूको क्लवजस्तो मात्र देखिएको छ । दुई छाक टार्न, हातमुख जोर्न र परिवारका आधारभूत आवश्यकता पूर्तिका लागि संघर्षरत व्यक्तिले कसरी लगानी, व्यापारको छलफल हुने संस्थालाई आफ्नो मान्न सक्छ ?

त्यसैले एनआरएनलाई पुनः ब्राण्डिङ अहिलेको आवश्यकता हो । यसका लागि एनआरएनले कुनै संस्थागत, नीतिगत वा संरचनागत सुधार वा फेरबदल गर्न पर्दैन । केवल विद्यमान उद्देश्यअनुरूप कार्यक्रमहरू हरेक देशमा ल्याएर निरन्तर कार्यान्वयन गर्दै जाने हो भने एनआरएनलाई हरेक प्रवासी नेपालीले आफ्नो संस्था ठान्नेछन् नत्र हो भने प्रवासी नेपालीहरूको सिंगो संख्या भजाएर सीमितले मात्र फाइदा लिने फोरम मात्र बन्नेछ । प्रजातन्त्रको प्रचलित मान्यताअनुसार बहुसंख्यकको प्रतिनिधित्व हुनपर्नेमा यो संस्था केवल मुठ्ठीभरको पेवा मात्र बन्न पुग्नेछ । साँचो अर्थमा 'नेपालीका लागि नेपाली' नभई 'सीमित नेपालीका लागि एनआरएन' बन्नेछ । ●

*(लेखक नेपाल पत्रकार महासंघ युकेका अध्यक्ष हुन् ।)*

> एनआरएनलाई पुन: ब्राण्डिङ अहिलेको आवश्यकता हो । यसका लागि एनआरएनले कुनै संस्थागत, नीतिगत वा संरचनागत सुधार वा फेरबदल गर्न पर्दैन । केवल विद्यमान उद्देश्यअनुरुप कार्यक्रमहरु हरेक देशमा ल्याएर निरन्तर कार्यान्वयन गर्दै जाने हो भने एनआरएनलाई हरेक प्रवासी नेपालीले आफ्नो संस्था ठान्नेछन् नत्र हो भने प्रवासी नेपालीहरुको सिंगो संख्या भजाएर सीमितले मात्र फाइदा लिने फोरम मात्र बन्नेछ ।

# Kathmandu's 20 years Rail Vision



Dr. Binod Lal Amatya
Twitter: @binodlalamatya

## Background

Kathmandu, the capital and economic hub of Nepal, is in danger of becoming stagnant due to poor transport infrastructure. Life is a daily struggle in the capital for commuters. The existing transport network is fragmented and 'connectivity' of the old and new settlements in the Kathmandu valley barely exists.

The valley is in a need of a comprehensive urban design, infrastructure planning and development. In order to make the capital connected, organized, vibrant for 21st century, a radical change in its transportation infrastructure is essential. Such change will only be possible through the development of a modern urban railway network within the valley.

A new mode of transport in the valley, that is metro system, is central to regeneration of our city and revitalising the economy of the whole country. Bus Rapid Transit (BRT system) in the capital is a shortsighted vision and will not solve the transport problems of the capital in the long term. Neither does the proposed mono-rail in the Ring Road. The city is in a need of a mass rapid transit system, a system that could operate at speeds greater than 40 kilometres per hour and transport thousands of people every hour from one corner to the other corner of the valley.

## Crossrail in Kathmandu

When planning an urban metro rail to service the city and sub-urban areas in the valley, the concept of 'Crossrail in Kathmandu' is necessary. The concept comprises the establishment of railway routes crossing the city, which can rapidly connect the suburban areas. As Crossrail of Kathmandu, two lines are proposed namely the Kathmandu Line and Patan lines as shown on the route map. The Kathmandu line runs east to west whilst the Patan line runs north to south of the valley. The current effort of the Investment Board to carry out a detail feasibility study of the route connecting Dhulikhel to Nagdhunga is a true reflection of the comprehension of the 'Crossrail concept'.

Kathmandu is the national hub. The city core area, located within the Ring Road, is the Central Activity Zone (CAZ) of the capital and a Prime Opportunity Area (POA). This area is in a need of better

connectivity with other growing 'opportunity areas' (OAs) around the valley for intra-hub (travel within hub) connectivity. Thus, the proposed two lines will pass through the CAZ and will connect suburban areas such as Budhanilkantha in the north, Chapagau and Gogadabari in the south, and Thankot in the west and Sankhu and Banepa in the east.

## Metro rail network for the greater Kathmandu

In addition to the two Crossrail lines, the Bishnumati Line is proposed to facilitated further connectivity at an intra-hub level. This line also passes through the CAZ and connects suburban areas such Darmasthali in the north and Chobhar and Dakshinkali in the south. The CAZ will be further facilitated by a circle line named as Chakrapath Line, which could follow the current alignment of the Ring Road.

Urban rail network is not just a transportation facility; it is also an instrument to restructure our city. In this regard, satellite towns can be built by extending the rail network to many suburban areas and developing a railway station at the heart of the new settlements. In this regard, the outer circle line named as Valley Line is proposed for further intra-hub level connection. This line will connect suburban areas of the valley such as Bungamati, Thecho, Badegaun, Lubhu, Gokarna, Kapan, Tokha, Ramkot, Balambhu, Satungal, and Bhatkepati.

With the introduction of a modern transport system, care is essential to preserve the uniqueness of the 'historic old settlements' of the suburban areas. In this regard, the old settlements need to be rehabilitated, but in the meantime can be regenerated by developing a 'sister' town in the vicinity and such towns will be connected with the railway network. In this regard, it is proposed that railway stations are located at the outskirts of the old settlements. Such proposed railway stations are named as

> A new mode of transport in the valley, that is metro system, is central to regeneration of our city and revitalising the economy of the whole country.




Figure 1
Proposed metro rail map for the Kathmandu Valley

New Bungamati, New Thecho, New Badegaun, New Lubhu, and New Kirtipur.

Currently, no orbital connection exists in these suburban areas and interconnectivity is very poor. Realising the fact the government is attempting to build the second Ring Road. However, such introduction could bring in huge risk of further urban sprawl in the sub-urban area and further damage to the environment of the valley and destruction of the unique heritage so far remained intact. This could be avoided with the introduction of the Valley Line. This will allow new development within and around the metro stations area only.

## Underground/ Elevated metro system

Metro rail in the Kathmandu Valley can be developed in three ways:

- Surface tracks (At-grade)
- Elevated tracks and
- Underground bored tunnels.

As the city is densely populated and the city roads are very narrow, a metro by tunnels is the best option in the densely populated areas of Kathmandu, Lalitpur and Bhaktapur. In general, the metro should be underground in the core areas of the city within the Ring Road, while it could be a combination of surface and elevated tracks outside the Ring Road. Tunnelling would be the best option for a metro rail network in the core urban area because it would avoid disruption in the urban settlement during the construction and operation, avoid expensive land/property acquisition for the new infrastructure, maintain historical value of the city keeping local heritage intact. Tunnels could be safely built in the prevailing geological and geotechnical conditions of the Valley.

## Business hubs in Kathmandu

Kathmandu will inevitably continue to grow. Many OAs have already evolved at many parts of the valley in recent years. The city has a great potential to be an important economic hub for Sino-Indian Trade. Thus, certain parts of the valley outside the CAZ should be developed as the business hubs of the capital and connect them with railway lines. Locations such as Chobhar and Banepa are proposed for the 21st century business hubs of Kathmandu.

The first location is promising due to favourable ground conditions. A rocky outcrop of considerable size at Chobhar will enable economical construction of high-rise buildings with few engineering problems. Proper planning of the area, using it to attract headquarters of major banks or businesses will enable it to be developed as a future business hub of Kathmandu in a similar way to that by which Canary Wharf in London or Manhatan in New York were developed. Proximity of the area with the POA adds value to such development. The proposed Kathmandu - Hedauda Tunnel

Highway also passes through Chobhar. A wider vision of such a business hub could result from the government current effort to develop a dry port in Chobhar.

The second proposed location 'Banepa' is already an established business transit to the northern boarder. Interconnectivity of these two business hubs at Chobhar and at Banepa via metro rail will expedite economic prosperity of the Valley and bolster the economy of the whole country.

## National and International Connection

A broader vision should be adopted while planning the metro-rail network within the valley. Since it is impossible to connect every corner of the city just by the metro, a bus network serving metro

The first location is promising due to favourable ground conditions. A rocky outcrop of considerable size at Chobhar will enable economical construction of high-rise buildings with few engineering problems.

stations should also be developed. It is essential to connect the metro system with the proposed regional/national railway network for inter-hub (travel between hubs) connection. Only with such connection, grand success of metro will materialise.

In addition, the prospect of a Trans-Himalayas railway connection between Kathmandu and Tibet (China) should be taken into consideration as well. Studies have shown that there are a few alternatives for connection between Kathmandu and Tibet and the connection could come as close as to Banepa, Sankhu, Tokha or Dharmasthali.

## Strategic Development

A phased development is an appropriate way to achieve this bold mission. Detail feasibility study is necessary to finalise the exact alignment of the routes and put these proposed routes/lines in a priority order to build. A pilot scheme should be initiated to test the performance and popularity of the metro system. Kathmandu Line connecting Bhrikutimandap and Banepa could be a best section to launch the metro system in Kathmandu as a pilot scheme.

With a mission to achieve the proposed complete rail network (Figure 1) with national and possible international connections within next 20 years, if action can be taken now, Kathmandu can be transformed, the city will be future proofed and the dream of a new prosperous Nepal ensue with success. In this regards, the current efforts of the Investment board, the Department of Railway and Kathmandu/Patan Metropolitan Authorities to conduct metro feasibility studies at different parts of the city can be regarded good initiatives. However, these organisations seem to be working in isolation and such development initiatives will not produce meaningful output with a piecemeal approach. Strategic coherent effort, leadership and visionary thinking are missing in the current attempts. An integrated broad vision with a combined effort of all relevant government bodies is essential.




Figure 2
Interconnectivity of business hubs within the Valley

## Conclusions

The metro rail network is the only sustainable solution for keeping the capacity city moving for the present and future. The introduction of such system is vital for environmental sustainability, economic prosperity and the quality of life in Kathmandu. Such development could rejuvenate and regenerate the historic valley. We must embrace much bolder thinking with insight and vision. Our thinking should embrace the next 20 to 50 years. Lack of vision, action, and investment for the capital city has left the valley full of urban sprawl, pollution and congestion everywhere.

The country is in need of a new resilient Kathmandu. Kathmandu is the engine of the country. New Kathmandu will help to transform the whole country. Thus, the development of the railway infrastructure is a timely need for the capital. ●

*(Dr. Amatya is a chartered civil engineer and principal ground engineering consultant currently practicing in the UK)*

# एनआरएन अभियानमा अहोरात्र



कुल आचार्य
उपाध्यक्ष, एनआरएनए आइसिसी

सन् १९७० को दशक । नेपालीहरू विस्तारै विदेश जाने प्रचलन शुरू हुंदै गर्दा आमनेपालीका हकमा सपना थियो त्यो । पारिवारिक पृष्ठभूमिका केही वा पढेलेखेका ज्यादै थोरै भाग्यमानीमात्र विदेशी भूमिमा टेक्न पाउंथे । ती भाग्यमानीमा ब्रिटिश गोर्खाहरूका सन्तान पनि गनिन्थे ।

अग्रजहरूकै स्मृति सुन्दा पनि अचम्म लाग्छ जतिबेला नेपाली अनुहार भेटिंदा टक्क अडिएर बोल्न मन लाग्थ्यो । नेपाली नेपालीको सानो झुण्ड बनाउनु अहिलेका हलमा कार्यक्रम भएभन्दा बढि महत्व लाग्थे ।

तर, समय बदलिएको छ । भनिन्छ, सार्क मुलुकबाहेक विदेश गएका नेपालीको संख्या अहिले ५० लाख हाराहारी छ । रोजगारी, अध्ययनबाहेक विदेशमै सेटल्ड भएका नेपालीको संख्या पनि लाखौं छ अब । प्रवासमा नेपालीको जनघनत्व बढिरहंदा तिनलाई एउटै नेटवर्कमा जोड्न, आफ्नो पहिचान कायम राख्न, दुःख सुःख बांड्न र मातृभूमिका लागि सामूहिक रूपमा केही योगदान गर्न केही अग्रजहरूको परिकल्पना स्वरूप एनआरएनए जन्म भयो । एनआरएनए सञ्जाल अहिले विश्वका ८० देशमा फैलिइसकेको छ । मेरो यो लेख एनआरएनए अभियानमै केन्द्रित रहनेछ ।

गैरआवासीय नेपाली संघ बेलायत स्थापनादेखि नै म यो पवित्र संस्थामा आबद्ध छु । बेला बेला मलाई लाग्ने गर्छ यो पनि एउटा नशा नै हो किनकि घर, परिवार अनि व्यापार व्यवसाय चटक्क छाडेर यो अभियान भनेपछि जहां पनि पुग्ने बानी भएछ । अहिले आफूलाई गैरआवासीय नेपाली संघको एक सिपाहीको रूपमा परिचय गराउन पाउंदा गौरवान्वित महशुस पनि हुन्छ । सन् २००५ देखि एनआरएनए युकेमा आवद्ध भएलगत्तै २००७ देखि २००९ सम्म सदस्य, २००९ देखि २०११ सम्म उपाध्यक्ष र २०११ देखि २०१३ सम्म एनआरएनए युके अध्यक्ष भएर धेरै अनुभव संगाल्ने अवसर पाएं । म जहिले पनि भन्ने गर्छु कि ग्रासरूटबाट आएको मान्छे यस संस्थामा लागेर मैले धेरै सिकें र अझै सिक्ने क्रम जारी छ ।

बेलायतवासी अग्रज अभियन्ता, आमाबुवा, दाजुभाई, दिदीबहिनी सबैको आर्शीर्वाद र मायाले मैले सन् २०१३ देखि २०१५ सम्म आइसिसी सदस्य, सन् २०१५ देखि २०१७ मा यूरोप कोअर्डिनेटर र सन् २०१७ देखि २०१९ सम्म आइसिसी उपाध्यक्षका रूपमा काम गर्ने मौका पाएं । यी विभिन्न पदमा रहेर मैले धेरै आयामबारे बुझ्ने अवसर पाएं, साथीभाइ कमाएं ।

एनआरएनए यूके मेरो घर हो । मैले सामाजिक क्षेत्रमा जे जति राम्रो काम गरें, यहींबाट सिकेको हुं । मैले संस्थामा काम गर्न थाले लगत्तै एनआरएनए यूकेका अग्रजहरूको विश्वास जित्न सफल भएं । मैले इमान्दारीपूर्वक गरेका काम यूकेवासी नेपालीहरूले मनपराइ दिनुभयो ।

एनआरएनए मार्फत मातृभूमिको सेवा गर्ने मौका पाएं । मेरो जन्मभूमि पर्वत, जुम्ला, सुस्ता पुगेर नेपाली जनताको सेवा गर्दै उहांहरूको दुःखेको घाउमा मल्हम पट्टी लगाउन पाएं । एनआरएनए यूके अध्यक्ष हुंदा यहांस्थित संघसंस्थाहरूसंग सहकार्यलाई मैले पहिलो प्राथमिकतामा राखें । नर्सिङ एसोसिएसन यूकेसंग मिलेर जुम्लामा बर्थिङ सेन्टर निर्माण, नेपाल पत्रकार महासंघ यूकेसंग मिलेर पत्रकारका लागि अक्षय कोष स्थापना, सहारा यूकेसंग मिलेर नेपाली खेलाडीका लागि सहयोग गर्ने मौका पनि मलाई मिल्यो ।

त्यसबाहेक प्रवासबाट पनि जन्मभूमिको



↑ जुम्लामा बर्दिंग सेन्टर निर्माण अभियान

विकासका लागि लगानी गर्नुपर्छ भनेर ट्रेड एण्ड इन्भेस्टमेन्टको सुरूवात गरें । प्रवासमा रहेका साथीहरूको समूह बनाएर हाइड्रो, माइक्रो फाइनान्स, एनआरएनएको गौरव गर्न मध्येका एक काम शंखमूल पार्क निर्माण मेरै नेतृत्वमा सम्पन्न भयो । उक्त पार्क अहिले संरक्षणका लागि ललितपुर महानगरपालिकालाई हस्तान्तरण गरिएको छ ।

एनआरएनए यूके मेरो पाठशाला भएकोले यहांबाट आर्जन गरेको ज्ञान नै मैले खर्च गर्दै आएको छु । यसबीचमा मैले साना ठूला गरी पांच दर्जन भन्दा बढी परियोजना सम्पन्न गर्न सक्रिय भूमिका निर्वाह गरेको छु ।

एनआरएनए यूके जस्तो संस्थालाई सधैं छाता संस्थाका रूपमा विकास गर्नुपर्छ भनेर होस् वा पूर्वअध्यक्षबाट संरक्षक बनाउन पर्छ भनेर सुरूवात पनि गरियो । यसले एनआरएनए यूकेलाई निरन्तर राम्रो बाटोमा अघि बढ्न सघाइरहेको विश्वास मलाई छ ।

एक व्यवसायीका रूपमा यूकेमा रहेपछि समाजसेवा र च्यारिटी मेरो पहिलो प्राथमिकतामा रहंदै आएको छ । मेरो हैसियतले म जति सक्छु, सहयोगका हात फैलाउंछु । हुन त मैले यति च्यारिटी गरें भनेर आफ्नै चर्चा बटुल्ने मेरो उद्देश्य पनि होइन् । तर, मलाई लाग्छ मेरो सानो सहयोगले अरूलाई प्रेरित गर्नेछ ।

कतिपय मानिसहरू भन्ने गर्छन् एनआरएनए धनीहरूको क्लब बन्यो, यसले सर्वसाधारणलाई छोएन । म साथीहरूको त्यो भावनालाई कदर पनि गर्छु । किनकि जब हामी नेतृत्व चुन्ने तरखरमा हुन्छौं, तब हामीलाई पैसाको अहमता बढ्छ । करोडौं खन्याउंछौं, मतदाता किन्छौं । यसो गर्दा क्षमतावान, बुद्धिजिवी पाखा लाग्नु स्वाभाविक हो । यसको मैले घोर विरोध गर्दै आएको सर्वविदितै छ । यसबाहेक मेरो अर्को पनि चासो के छ भने नयां नेतृत्व केही व्यक्तिले टिका र आशीर्वादको भरमा चुनिनु हुन्न । प्रजातान्त्रिक ढंगबाट नयां समावेशी नेतृत्व अबको आवश्यकता हो ।

खाडी मुलुक हुन् वा अमेरिका, जहाँ बसेका भए पनि सबै प्रवासी नेपाली अटाउने एनआरएन बनाउने आजको मुख्य चुनौती हो जस्तो मलाई लाग्छ र मलाई विश्वास छ हामी सबै मिलेर अगाडी बढे हामी अवश्य सफल हुने छौं । ●

खाडी मुलुक हुन् वा अमेरिका, जहाँ बसेका भए पनि सबै प्रवासी नेपाली अटाउने एनआरएन बनाउने आजको मुख्य चुनौती हो जस्तो मलाई लाग्छ र मलाई विश्वास छ हामी सबै मिलेर अगाडी बढे हामी अवश्य सफल हुने छौं ।

# यसरी सम्पन्न गरियो पाँचौं काउन्सिल बैठक



▶ पुनम गुरुङ
उपाध्यक्ष/संयोजक,
पाँचौं काउन्सिल बैठक एनआरएनए युके

एनआरएनए युके कार्यसमितिको बैठकले विभिन्न कार्यक्रमहरू आयोजना गर्न कार्यसमितिका पदाधिकारी तथा सदस्यहरूलाई विभिन्न जिम्मेवारी प्रदान गरेको थियो । जसमध्ये पाँचौं काउन्सिल बैठकको आयोजना गर्ने जिम्मेवारी भने मैले पाएकी थिएं । जुन बैठक गत २९ सेप्टेम्बर २०१८ शनिबारका दिन अल्डरसटस्थित एम्पायर हलमा मेरो संयोजकत्वमा ११ बुँदे घोषणापत्र जारी गर्दै भव्य र सभ्य रूपमा सम्पन्न भयो । करिब २०० संघसंस्थाका प्रतिनिधिहरू, समाजका अग्रज व्यक्तित्वहरू, एनआरएनए आईसीसीका पदाधिकारी र सदस्यहरू लगायतको उपस्थितिमा व्यापक रूपमा भएको छलफलको परिणाम स्वरूप ११ बुदें घोषणा पत्र जारी गरिएको हो ।

सो काउन्सिल बैठकमा प्रमुख अतिथि बेलायतका लागि नेपाली राजदूत डा. दुर्गा बहादुर सुवेदी, बिशेष अतिथि एनआरएनए आईसीसी उपाध्यक्ष कुमार पन्त र बिशेष अतिथि कुल आचार्य, आईसीसी सल्लाहकार डा. हेमराज शर्मा, सुरेन्द्र श्रेष्ठ, युरोप क्षेत्रीय महिला उपसंयोजक संगीता मरहट्टा, एनआरएनए युकेका प्रमुख संरक्षक मेजर (रि) डमर घले, संरक्षक एंव पूर्व अध्यक्ष सूर्य गुरूङ, संरक्षक एंव पूर्व अध्यक्ष योगेन क्षेत्री, एनआरएनए युके अध्यक्ष योगकुमार फगामी, एनआरएनए युकेका उपाध्यक्षहरू प्रेम गाहामगर, शेर बहादुर सुनार, सुशिला राई, कोषाध्यक्ष सचिन श्रेष्ठ, प्रवक्ता रमेश सराङ्कोटी लगायतले गैरआवासीय संघको वर्तमान अवस्था र भावी योजनाहरू बारे बोल्नु भएको थियो ।

एनआरएनए युकेका महासचिव राजकुमार त्रिपाठीले औपचारिक कार्यक्रम संचालन गरेको सो बैठकमा नेपाली कला, संस्कृति, खेलकुद र साहित्यमा बिशेष योगदान दिएका संघसंस्था तथा व्यक्तिहरूलाई सम्मान गरियो । त्यस्तै, एनआरएनए युकेका सल्लाहकार जीव बेल्वासेको अध्यक्षता र सल्लाहकार रोहित गुरूङले संचालन गरेको काउन्सिल बैठकमा विभिन्न बिषय र क्षेत्रमा रहेका समूहले छफफल गर्दै आ-आफ्नो सुझावहरू पेश गरेका थिए । बिहान १० बजे देखि साँझ ६ बजे सम्म संचालन भएको बैठकलाई विभिन्न संघसंस्थाले आर्थिक सहयोग गरेका थिए । साथै सो बैठक सम्पन्न गर्नका लागि एनआरएनए युके अध्यक्ष योगकुमार फगामी लगायत सिङ्गो कार्यसमिति, सल्लाहकार, विभिन्न संघसंस्था अध्यक्ष तथा प्रतिनिधि, पत्रकार र शुभचिन्तकहरूले बिशेष भूमिका खेल्नुभएको थियो । उपस्थित संघसंस्थाहरूका अध्यक्ष एवं प्रतिनिधि लगायतले दिनुभएको सुझावहरूको आधारमा ११ बुँदे अल्डरसट घोषणा पत्र जारी गरिएको थियो । जुन निम्नानुसार रहेको छ ।

**गैरआवासीय नेपाली संघ युके पाँचौं काउन्सिल बैठक २०१८**
**घोषणापत्र**
**अल्डरसट, बेलायत**

गैरआवासीय नेपाली सँघ युकेको विधान अनुसार गैरआवासीय नेपाली संघ (एनआरएनए) युकेको पाँचौं राष्ट्रिय परिषदको बैठक आज मिति सेप्टेम्बर २९, २०१८ शनिबारका दिन अल्डरसट, बेलायतमा बस्यो । बेलायतमा रहेका करिब १०० संघ संस्थाका प्रतिनिधिहरू, समाजका अग्रज व्यक्तित्वहरू, गैरआवासीय नेपाली संघका अन्तर्राष्ट्रिय समन्वय समिति र राष्ट्रिय समन्वय समितिका पदाधिकारी र सदस्यहरू लगायतको उपस्थितिमा भएको सो बैठकमा विभिन्न विषयहरूमा गम्भीर छलफल गरी गहन सुझावहरू प्रस्तुत भयो । यसरी प्राप्त सुझावहरूलाई आधार बनाइ यो काउन्सिल बैठक अल्डरसट घोषणा पत्र २०१८ जारी गर्दछ ।

१. 'एकपटकको नेपाली सधैंको नेपाली' भन्ने मूलभावना अनुसार एनआरएनए युकेले नेपाल सरकारलाई हालै बुझाएको

ज्ञापनपत्रलाई आधार बनाइ गैरआवासीय नेपालीको नागरिकताको सुनिश्चितता गरिदिन यो बैठक नेपाल सरकारसमक्ष माग गर्दछ । गोरखाहरूको अवस्था फरक भएको हुँदा उनीहरूको नागरिकताको सवाललाई फरक ढंगले सम्बोधन गर्न पनि यो बैठक सरकारसमक्ष माग गर्दछ ।

२. गोरखाको समस्या गोरखाहरूको मात्र नभई राष्ट्रिय महत्वको सवाल भएकाले यथाशीघ्र समाधानका लागि नेपाल सरकार र बेलायत सरकारलाई सशक्त पहल गर्न यो बैठक माग गर्दछ । गोरखाहरूको सवालप्रति ऐक्यवद्धता र गोरखाको आन्दोलनलाई हरतरहले सहयोग गर्ने वचनवद्धता यो बैठक व्यक्त गर्दछ । गोरखाहरूले वंशजका आधार प्राप्त गरेको नेपाली नागरिकता निरन्तर कायम रहनुपर्ने र उनीहरूका सन्ततिहरूले पनि सो अधिकार पाउनुपर्ने माग नेपाल सरकारसमक्ष गर्दछ ।

३. नेपालमा लगानीको सम्भावनाका बारेमा छलफल गर्न विभिन्न कार्यशाला आयोजना गर्न यो बैठक एनआरएन युकेलाई सुझाव दिन्छ । साथै, नेपाल सरकारको 'सम्बृद्ध नेपाल सुखी नेपाली' राष्ट्रिय अभियानलाई गैरआवासीय नेपालीका तर्फबाट सहयोग गर्न एनआरएनए युके 'एक एनसिसी एक परियोजना'को अवधारणा गैरआवासीय नेपालीहरूसमक्ष प्रस्तुत गर्दछ ।

४. विदेशमा आर्जन गरेका सीपलाई नेपालमा स्थानान्तरण गर्नका लागि विदेशमा कार्यरत दक्ष जनशक्तिलाई नेपाल फर्काउने कार्यक्रम ल्याउन यो बैठक नेपाल सरकारसमक्ष माग गर्दछ । त्यस्तो कार्यक्रम ल्याउन नेपाल सरकारलाई दबाब दिन र युकेमा रहेका दक्ष जनशक्तिको तथ्यांक संकलन गर्न बैठक एनआरएनए युकेलाई सुझाव दिन्छ ।

५. सन् २०२१ मा बेलायतमा हुन गइरहेको राष्ट्रिय जनगणनामा प्रयोग गरिने विवरणमा नेपाली समुदायका लागि 'नेपाली महल' राखिदिन माग गर्दै बेलायती प्रधानमन्त्रीलाई पत्र लेख्ने निर्णय यो बैठक गर्दछ । साथै, बेलायतमा संचालनमा रहेको युनिभर्सल क्रेडिट योजनाका बारेमा नेपाली समुदायलाई जानकारी दिलाउन सचेतनामूलक कार्यक्रम ल्याउन यो बैठक एनआरएनए युकेलाई अनुरोध गर्दछ ।

६. बेलायतमा नेपालीहरूको नेपालीपन झल्कने साझा घरको अपरिहार्यता बैठकमा एकमतले महसुस गरियो । नेपाल हाउस बिज्नेस मोडलमा निर्माण गर्ने विगतको काउन्सिल बैठकको निर्णयलाई निरन्तरता दिँदै नेपाल हाउस परियोजनालाई थप बृहत स्तरमा अगाडि बढाउन यो बैठक एनआरएन युकेलाई आग्रह गर्दछ ।

७. युकेबाट च्यारिटीमार्फत नेपालमा भइरहेको सहयोगलाई अझै सशक्त बनाउने प्रतिवद्धता यो बैठक व्यक्त गर्दछ । युकेमा रहेका व्यक्ति तथा संघ संस्थालाई एनआरएनए युकेमार्फत च्यारिटी कार्यक्रम संचालन गर्न वा त्यसो हुन नसकेमा गरिएको च्यारिटी कार्यको विवरण एनआरएन युकेमा उपलब्ध गराउन यो बैठक युकेमा कार्यरत सबै व्यक्ति तथा संघसंस्थालाई हार्दिक अनुरोध गर्दछ ।

८. युकेमा बसोबासरत नेपाली युवाहरूलाई एनआरएनएप्रति आकर्षण जगाउन, उनीहरूले सिकेका सीपलाई नेपालमा स्थानान्तरण गर्न र उनीहरूको सर्वाङ्गीण विकासका लागि एनआरएनए युकेको युवा विभागलाई अझ प्रभावकारी बनाउने प्रतिवद्धता यो बैठक व्यक्त गर्दछ ।

९. नेपालमा महिला तथा बालबालिकाहरूमाथि भइरहेको हिंसाप्रति यो बैठक गम्भीर चिन्ता व्यक्त गर्दछ । त्यस्ता घटनाहरूको छानविन गरी  दोषीमाथि कडा कारबाही गर्न बैठक माग गर्दछ । बेलायतमा बसोबासरत महिला, बालबालिका र ज्येष्ठ नागरिकहरूले भोग्नु परिरहेको समस्या समाधानका लागि जनचेतनामूलक कार्यक्रम गर्न एनआरएनए युकेलाई सुझाव दिन चाहन्छ ।

१०. एनआरएनए युकेको राज्यव्यवस्था समितिको संयोजक एनआरएनए युकेको पदेन सदस्य हुने, विभागीय प्रमुखहरू उपाध्यक्ष हुने, एनआरएनए युकेका पूर्व अध्यक्षहरू संरक्षक रहने, सल्लाहकार छनौटमा योग्यता एवं संस्थागत अभियन्तालाई मापदण्ड बनाउने, क्षेत्रीय रूपमा गठन भएका समितिहरू एनआरएनए युके केन्द्रको नियम बमोजिम संचालन हुने गरी विधान संशोधन गर्न यो बैठक एनआरएनए युकेलाई सुझाव दिन चाहन्छ ।

११. गैरआवासीय नेपाली संघ (एनआरएनए) युकेको पाँचौं काउन्सिल बैठकमा प्रमुख अतिथिको आतिथ्यता ग्रहण गरिदिनुभएकोमा बेलायतका लागि नेपालका राजदुत डा. दुर्गाबहादुर सुवेदी, गैरआवासीय नेपाली संघ अन्तर्राष्ट्रिय समन्वय समितिका उपाध्यक्षहरू कुमार पन्त र कुल आचार्य, अन्तर्राष्ट्रिय समन्वय समितिका सल्लाहकारहरू, एनआरएनए युकेका प्रमुख संरक्षक डमर घले र संरक्षकहरू, एनआरएनए युकेका सल्लाहकारहरू, सबै संघ संस्थाका प्रतिनिधिहरू, स्पोन्सरहरू लगायत यो काउन्सिल बैठक सम्पन्न गर्न सहयोग पुर्‍याउनुहुने सबैलाई यो बैठक हार्दिक धन्यवाद ज्ञापन गर्दछ ।

नेपाल पत्रकार महासंघ बेलायत अध्यक्ष नरेश खपाङ्गीमगर संयोजक, एनआरएनए युके प्रवक्ता रमेश सराङकोटी, पत्रकारहरू नवीन पोखरेल, ध्रुवराज अर्याल र पूर्ण गुरूङको समूहले सो घोषणापत्र तयार गर्नुभएको थियो ।

अन्त्यमा उक्त बैठकलाई सफलतापूर्वक सम्पन्न गर्नका लागि एनआरएनए युके सिङ्गो कार्यसमितिका साथीहरू, सल्लाहकार, विभिन्न संघसंस्थाका अध्यक्ष तथा प्रतिनिधि लगायत प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा सहयोग गर्नुहुने सम्पूर्ण दाजुभाइ तथा दिदिबहिनी र आमन्त्रित प्रमुख अतिथि महामहिम राजदूत डा. दुर्गा बहादुर सुवेदी लगायत बिशेष अतिथि, अतिथि र पत्रकारहरूलाई मेरो हृदयदेखिनै हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छु । धन्यवाद ।



नागरिकता ऐन संशोधन विधेयक संसदमा दर्ता गरिएलगत्तै एनआरएनए युकेको प्रतिनिधिमण्डलले काठमाडौं पुगी गृहमन्त्री रामबहादुर थापा बादल, कानुन मन्त्री भानुभक्त ढकाल, राष्ट्रिय सभाका अध्यक्ष गणेश तिमिल्सिना, सांसदहरू गगन थापा र डा. सूर्य पाठक लगायतलाई आफ्ना सुझाव पेश गर्यो ।









# विभिन्न खेलकुद प्रतियोगितामा एनआरएनए युकेको सहयोग र सहभागिता














एनआरएनए
वेल्स राज्य समन्वय
समितिका साथ
एनआरएनए युके




भ्वाइस अफ नेपाल
सिजन १ को टोलीलाई
एनआरएनए युकेले
युके ल्याएको थियो ।

तत्कालीन प्रधानमन्त्री
शेरबहादुर देउवासित भेटपछि
फोटो लिँदै एनआरएनए युकेको टीम



**लन्डनको केन्द्रभाग ट्राफलगर स्क्वाएरमा हरेक वर्ष बुद्ध फाउण्डेसनसित मिली एनआरएनए युकेले नेपाल प्रवर्द्धन कार्यक्रम गर्दै आएको छ ।**



## स्कटल्याण्ड राज्य समन्वय समिति



## सन् २०२१ मा युकेमा हुने जनगणनामा नेपाली महल राख्न माग गर्दै एनआरएनए युकेले बेलायती प्रधानमन्त्रीलाई ज्ञापन पत्र बुझायो ।









एनआरएनए अन्तर्राष्ट्रिय पत्रकारिता पुरस्कार पत्रकारद्वय होम कार्की र नविन पोखरेललाई प्रदान गर्दै ।



नेपालमा लोड सेडिंग हटाउने ऐतिहासिक कार्य गरेकोमा नेपाल विद्युत प्राधिकरणका प्रबन्ध निर्देशक कुलमान घिसिङलाइ एनआरएनए युकेको तर्फबाट सम्मान



तत्कालीन सभामुख ओनसरी घर्तीमगरलाई बेलायतबासी नेपालीको समस्याको समेटिएको ज्ञापन पत्र पेश गर्दै ।



उपराष्ट्रपति नन्दबहादुर पुनसित भेटवार्तापछि एनआरएनए युकेको टोली ।



तत्कालीन प्रधानमन्त्री शेरबहादुर देउवालाई ज्ञापन पत्र बुझाउँदै एनआरएनए युके अध्यक्ष योगकुमार फगामी

**नेपालबाट बेलायत आउनुभएका अर्थ मन्त्री डा. युवराज खतिवडा, वन मन्त्री शक्ति बस्नेत, उपप्रधान तथा स्वास्थ्य मन्त्री उपेन्द्र यादव लगायतसित एनआरएनए युकेले प्रवासी नेपालीको माग ध्यानाकर्षण गरायो ।**












उपसभामुख डा. शिवमाया तुम्बाहाम्फेलाई एनआरएनए युकेको ज्ञापन पत्र बुझाइँदै



पोखरेली मञ्चलगायत धेरै नेपाली संघसंस्थालाई एनआरएनए युकेले सहयोग गर्दै आएको छ



एनआरएनए युएसएका पूर्वअध्यक्ष डा. केशव पौडेललाई स्वागत गरिँदै



मिसेज नेपाल युके टीमसित एनआरएनए युके



पूर्व मिस नेपाल सुगारिका केसी र आइडिया फर नेपालको टोलीसित एनआरएनए युके



**बेलायत भ्रमणमा आउनुभएका प्रधानमन्त्री केपी शर्मा ओलीलाई एनआरएनए युकेको प्रतिनिधिमण्डलले भेटी ज्ञापन पत्र र सम्मान एकैसाथ बुझायो**















पूर्व प्रधानमन्त्री माधवकुमार नेपालसित एनआरएनए युकेले अन्तर्क्रिया गर्यो ।




कीर्तिमानी आरोही निर्मल पुर्जासित एनआरएनए युके टीम ।



बेलायत भ्रमणमा आएका परराष्ट्र सचिव शंकर दास बैरागीसित एनआरएनए युकेले छलफल गर्यो ।




शिव कल्चर सेन्टरलाई नेपाली मन्दिर खरिदका लागि एनआरएनए युकेको सहयोग रहेको छ ।



गण्डकी प्रदेशका अर्थमन्त्री किरण गुरुङसित एनआरएनए युके टोली

## गैरआवासीय नेपालीको १० अर्ब रूपियाँ नेपाली भित्र्याउने कार्यक्रमको घोषणा : नेपाल राष्ट्र बैंकका गभर्नर डा. चिरञ्जीवी नेपाल लगायत












## ५२ नेपाल पत्रकार महासंघ युकेका नवनिर्वाचित कार्यसमिति र नेपालबाट आउनुभएका महासंघका अध्यक्ष गोविन्द आचार्य र महासचिव रमेश विष्टको स्वागत










---

एनआरएनए युकेको यही सेप्टेम्बर
२०१९ मा हुन गइरहेको **नवौं महाधिवेसन**को
सफलताका लागि
हार्दिक शुभकामना व्यक्त गर्दछौं ।

Bhetghat

GURKHA RESTURANT

*A home of pure Nepalese authentic cuisine*

*Welcome to*

**Bhet-Ghat Gurkha Restaurant**

Dear valued customer...

Bhet-Ghat takes name from the word of Nepalese typical style of meening and greeting between each other. Gurkhas are renowned as best solders in the world in the British Army. You will find at Bhet-Ghat in an unique Nepalese restaurant award winning chefs are friendly and helpful. Its a family run business.

We are now please to welcome you to enjoy with warm, friendly, family and relaxed atmosphere and would appreciat any coments or suggestion made by our customers, Please visit us again. Thank You

*Menu*

CURRY CLUB (BANQUET NIGHT)

**Tel. 01252-311120**

**9-11 High Street Aldershot, Hants GU11 1BH**




**SHER BAHADUR SUNAR**

Vice President

NRNA UK & Bhetghat Gurkha Restaurant, Aldershot

